**माइ काइन्ड अफ गर्ल**

लेखक : आशिष जङ्
भाषा-सम्पादन : रोशन दाहाल
संस्करण : पहिलो/२०७८
प्रकाशक : पाँचपोखरी प्रकाशन गृह
वितरक : पाँचपोखरी बुक स्टोर
न्युरोड, काठमाडौँ
सम्पर्क : ०१-४२२१६३४
इमेल : panchpokharibookstore@gmail.com
panchpokharibookstore@yahoo.com
लेआउट : धन महर्जन
ISBN : 978-9937-0-9434-4

साइन्सले भन्छ, 'मुटुमा हड्‌डी हुँदैन ।'
मायाले भन्छ, 'त्यसो हो भने मुटु टुट्छ कसरी ?'
साइन्सले भन्छ, 'मुटुको साइज लगभग १२ सेन्टिमिटरको हुन्छ ।'
फेरि मायाले भन्छ, 'त्यस्तो हो भने संसारका सारा पीडाहरू
यस मुटुमा अट्छन् कसरी ?'

तिमीले देख्यौ,
मौन देख्यौ ।
स्थिर देख्यौ ।
सेतो देख्यौ ।
शान्त, सुन्दर देख्यौ ।
मेरो एक अवतार देख्यौ ।
नजर भएर पनि नजरअन्दाज गर्ने ए अन्धो मान्छे !
तिमीले देख्यौ,
म जमेर बसेको ।
देख्यौ दह बनेर बसेको ।
तर,
के तिमीले देख्यौ,
मेरो बहाव ?
देख्यौ के ?
म बहकिएर बरालिँदै बगेको ?
यहाँ पो म एक छु, तर म अनेक छु ।

***"प्रेम धनं सर्व धनं प्रधानम्"***

प्रेमधन सर्वश्रेष्ठ धन हो। प्रेमधन साथमा हुने मानिस संसारको सबैभन्दा धनी मानिस हुन्छ। सबैप्रति दया, माया, प्रेम र सद्भावजस्ता सद्गुण हुनुलाई नै खास अर्थमा प्रेमधन भएको मानिन्छ।

धेरै बलियो सम्बन्ध थियो मेरो,
तर धेरै कमजोर मान्छेसित।

Worldwide Release.
Coming Soon…



# धन्यवाद

गणेश बस्नेत तथा गोमा बस्नेत
लक्ष्मण ज्ञवाली तथा रीता ज्ञवाली (काठमाडौं)
मौलिका शेरचन कौर (भारत)
सुरेन्द्र जोशी तथा रोसी जोशी (अमेरिका)
नम्रता श्रेष्ठ (काठमाडौं)
नमुना राई (जर्मनी)
अनुशा दवाडी (काठमाडौं)
राम राई (धरान)
महेश के.सी. तथा सवी ममिता लामा (काठमाडौं)
गुरू वीरबहादुर के.सी. (काठमाडौं)
रमेश रावल (काठमाडौं)

# सम्पादकीय

एक दिन मैले एक जना साथीलाई 'के छ खबर' भनेर सोधेँ ।

उसले लामो सास फेर्दै भन्यो, "बेखबर छन् आजकाल के छ खबर भनेर सोधिने प्रश्नहरू पनि !"

त्यस्तो प्रतिष्ठित पदमा कार्यरत अफिसरजस्तो मान्छे ! आफ्नै गाडी चढेर हिँड्छ । बालुवाटारमा आफ्नै घर छ । सुन्दर श्रीमती छिन् । मुख पनि उज्यालो नै देख्छु । नपुग्दो केही छैन । तैपनि किन यस्तो दुःखी भएको होला ? म अचम्ममा परेँ ।

कौतूहल हुँदै मैले फेरि प्रश्न गरेँ, "तँ त एकदमै खुसी देखिन्छस् त ! कुराचाहिँ किन यस्तो दुःखी गरिरहेको ?"

उसले एकपटक मतिर पुलुक्क हेर्‍यो र निधार खुम्चाउँदै चित्त नबुझेको पारामा भन्यो, "कस्तो कुरा गरेको होला ? हँसिलो अनुहार हुँदैमा सबै खुसी हुन्छन् भन्ने हुँदैन नि ! पीडाले मन पो पोल्छ, अनुहार होइन नि यार !"

कुरा बुझ्दै जाँदा पछि मैले थाहा पाएँ - आफ्नी श्रीमतीसँग दिनदिनै हुने कलहले उनीहरूबीच असमझदारीको

खाडल झनै गहिरो भइरहेको रहेछ । आज पनि ऊ श्रीमतीसँग झगडा गरेर आएको रहेछ ।

उसले मसँग भन्यो, "मलाई थाहा छ, बैंकको ऋण र आफन्तको माया पाउन सम्पत्ति देखाउनै पर्छ । त्यसैले आफूलाई बिर्सेर भए पनि रातदिन मिहेनत गरिरहेको छु । त्यत्रो कमाएर राखिदिएको छु त ! तैपनि उसको चित्त बुझाउनै सक्दिनँ यार ! म त दिक्क भइसकेँ ।"

उसको मात्र होइन, आजकाल प्रायःजसो जोडीहरूमा यस्तो हुनु सामान्य कुरा भइसक्यो । सबैको एउटै गुनासो सुनिन्छ, "चित्त बुझाउनै गाह्रो छ ।"

पहिलाभन्दा मान्छे नै फरक खालको हुन थालेको छ भन्ने कुराहरू मैले बुझाउन नसकेको हो या उसले नबुझेको हो ।

एक जना सञ्चारकर्मी साथी आफ्नी श्रीमतीसँग पाँच वर्षको वैवाहिक सम्बन्धबाट अलग भएपछि आफ्नो पीडा यसरी पोख्दै थियो, "मेरो खल्तीमा एउटा सानो प्वाल के परेको थियो, सिक्काहरूभन्दा धेरै मेरा आफन्तहरू हराए यार !"

चाहे सम्बन्ध भर्खरै सुरु गरेका युगलजोडीको होस् या वर्षौंदेखि प्रणयसूत्रमा बाँधिएर छोराछोरी या नातिनातिनी भइसकेकाहरूको होस्, मानिसहरू गुनासाको पोका नै बोकेर हिँडिरहेका देखिन्छन् । प्रायः सबै सम्बन्धहरूमा उस्तै र समान समस्याहरू देखिन्छन् ।

यस्ता समस्याहरू किन आइरहेका छन् त भनेर जान्न मलाई उत्सुकता भयो । यसबारे अनुसन्धान गर्न मन लाग्यो ।

खोज्दै जाँदा फेला परेका सबै रहस्यहरू समेटेर मैले यो पुस्तक 'माइ काइण्ड अफ गर्ल' तयार पारेको हुँ । आशा गर्छु, पढेपछि प्रायः सबैमा देखिइरहेका यस्ता समस्याहरूको न्यूनीकरण हुनेछ र पुस्तकमा भएका रहस्यहरू सबैलाई मन पर्नेछ । धन्यवाद ।

**- आशिष जङ्ग**

# भाग १

अंशु : ए मेरो रामतोरिया !

आभास : हजुर, मेरी इस्कुस !

अंशु : अनि छ नि, (लजाउँदै) मलाई किन इस्कुस भनेको ?

आभास : (हाँस्दै) मलाईचाहिँ किन रामतोरिया भनेको त ?

अंशु : (जिस्काउँदै) किनभने तिम्रो नाक रातोरियाजस्तै चुच्चो भएर हि.हि.हि.. !

आभास : (जिब्रो बाहिर निकालेर गिज्याउँदै) त्यसो भए तिम्रो मुख पनि इस्कुसजस्तै प्यात्त परेको छ, त्यसैले इस्कुस भनेको हा.हा.हा.. (मजाले हाँस्छ) !

"आमा.. कस्तो मात्तेको बाइ !" यस्तो भन्दै अंशु आभासलाई जोडले अँगालो मार्छे । उसको छातीमा आफ्नो टाउको टाँसेर कानले उसको मुटुको ढुकढुकी सुन्दै केही बेर आँखा चिम्म गरेर बस्छे । अनि भन्छे, "आइ लभ यु मेरो रामतोरिया !"

आभासले पनि जोडले अंशुलाई आफ्नो अँगालोमा बेर्छ र उसको निधारमा चुम्बन गर्दै भन्छ, "आइ लभ यु टू । तिमी

मेरी गर्लफ्रेण्ड, तिमी नै मेरो बेस्टफ्रेण्ड, अनि मेरी मामूले जस्तै मेरो केयर र माया गर्ने मेरी सानीमामू हौ हा..हा.. ! मेरो सारा संसार नै तिमी हौ, माया !'

अंशुले पनि भावुक हुँदै भन्छे, 'तिमी पनि त मेरो प्राणप्यारो, मेरो मुटुको ढुकढुकी हौ नि । मेरो मायाको डोरो हौ । अनि नि.....!'

आभास : अनि के भन न, माया ?

अंशु : अनि नि.. हाम्रो भोलिपर्सि जन्मिने छोराछोरी पुन्टे-पुन्टीको हुनेवाला पापा.. ! हि...हि..हि..(लजाउँछे) !

यस्तै छन् यिनीहरू । अंशु र आभास । उमेरले दुवै जना पाका नै छन्, तर एक-अर्काको साथमा हुँदा कहिले बच्चाजस्ता बन्छन् त कहिले कोही अरूजस्ता । एक-अर्कासँग हुँदा 'यस्तो गर्नुपर्छ, त्यस्तो गर्नुहुन्न, अरूले के सोच्लान्' भन्नेजस्ता कुराहरूको मतलब नै गर्दैनन् । कुनै सीमित परिधि नै छैन उनीहरूको । न त कुनै अदृश्य जन्जीरहरूमा बाँधिएका छन् । त्यसैले यिनीहरूको माया गर्ने अन्दाजहरू पनि भिन्नभिन्न हुने गर्छन् । यिनीहरू दुवै जनालाई यो कुरा मज्जाले थाहा छ, "यस संसारमा ऊ मात्र एक व्यक्ति हो, जसले मलाई अरू कोहीसँग तुलना गर्दैन । त्यही भएर जज पनि गर्दैन ।"

उनीहरू जस्तो भए पनि, जे गरे पनि एक-अर्काप्रति कुनै गुनासो नै छैन । एक-अर्कालाई परिवर्तन गर्ने प्रयास नै गर्दैनन् । त्यही भएर होला, सायद अरू जोडीहरूको तुलनामा यिनीहरू अत्यन्तै खुसी देखिन्छन् । यिनको सम्बन्ध निकै

गहिरो र गाढा देखिन्छ । मानौँ, अर्कै संसारमा छन् ।

बडो अचम्मको छ यो जोडी । अझ्रै विचित्रको छ यिनको प्रेम कहानी । त्यो पढ्नुभन्दा पहिले आउनुहोस्, एकछिन यतातिर जाऔँ...।

# भाग २

उनले सोधिन्, "प्रेम के हो ?"

मैले भनैं, "तिम्रो याद ।"

उनले सोधिन्, "याद के हो ?"

मैले भनैं, "तिम्रो प्रतिक्षा ।"

उनले सोधिन्, "प्रतिक्षा के हो ?"

मैले भनैं, "मेरो जिन्दगी ।"

उनले फेरि सोधिन्, "जिन्दगी के हो ?"

मैले भनैं, "तिम्रो माया ।"

सुवासले आफ्नो पहिलो भेटमा सरूसित भएको कुराकानीका बारेमा यादमा मस्त भएर सुनाउँदै थियो, आफ्नो बेस्टफ्रेण्ड आभाससित ।

तपाईंको मनमा प्रश्न आइसक्यो होला, "फेरि यो सुवास को हो ?"

ल सुन्नुस्, उसले सबै आफैं भनिरहेको छ ।

म (सुवास) र आभास सानैदेखिका साथी हौं । म

अनाथका लागि आभास साथीभन्दा माथि मेरो भाइबराबर हो। हामीसँग एकदमै मिल्ने अरू दुई जना साथी पनि छन्। उनीहरूको चर्चा एकछिनमा गरौँला। फेरि एकैछिन यता हेरम् है त!

एक दिन म कलेजबाट हतारिँदै बाहिरिरहेको थिएँ। एक्कासि ठोक्किन्छु, ड्याङ्ग! आफूलाई लड्नबाट सम्हाल्दै हत्तपत्त ठोकिएतिर फर्किन्छु।

मेरा आँखा खुलेका खुल्यै भए। आँखाले अचानक सारा दुनियाँलाई ब्लर गरेर उसलाई मात्र जूम... फोकस् गर्न सुरु गऱ्यो। ऊबाहेक संसार नै स्लो मोसनमा आएको अनुभव भयो। उसको खैरो लामो केश छालजस्तै बगिरहेको थियो। उसका दाँतहरू ज्योतिजस्तै चम्किरहेका थिए। गुलाबी ती सुन्दर ओठहरूले मेरो मनमा फूलजस्तै छाप छाडिरहेका थिए। मृगका जस्ता ती गाजलु आँखा बन्दुकको गोलीजसरी मेरो छातीमा ठोक्किरहेका थिए र मलाई घाइते बनाइरहेका थिए।

एक्कासि एउटा हिन्दी चलचित्रको गाना मेरो कानमा बज्न थाल्छ... 'लूट गए... हाय... लूट गए तेरी मोहब्बत मे....'

पहिलो नजरमै हुने प्रेम भनेको सायद यही होला। म त्यस अपरिचित सुन्दर युवतीको मायाको गहिराइमा चुर्लुम्म डुबेर पौडिन मात्र के लागेको थिएँ... एउटा कोइलीको जस्तो मीठो सुरिलो आवाजले झसङ्ग हुन्छु। कल्पनाको संसारमा उडिरहेको म बिचराको पखेटा गायब हुन्छ र वास्तविक दुनियाँमा बजारिन्छु।

"आँखा छैन ?" त्यस सुन्दर युवतीले रिसले मलाई घुर्दै भन्दै थिई।

मेरो मनमा चाहिँ मयूर नाचिरहेको थियो। 'आँखा मात्र हो र, अब त मुटु नै छैन मैया ! तिमीले चोरिसक्यौ' भनेर भनिदिन मन थियो। तर अहँ, फिटिक्कै बोली फुटेन। ट्वाइलेट बस्ने बेलामा बलपूर्वक कनेझैं गरी बल्लतल्ल मेरो मुखबाट प्याट्ट एउटा आवाज फुट्यो, "सरी !"

यो सुनेपछि ऊ बारूलाजस्तै भुनभुनाउँदै, फतफताउँदै, आफ्नो बारूली कम्मर ठ्याम्ठ्याम् मर्काउँदै, फन्किँदै आफ्नो बाटो लाग्छे। साथमा मेरो मुटु चोरेर लान्छे र आफ्ना यादहरू छोडेर जान्छे।

ऊ त गई, तर मेरो दुर्गति सुरु भयो। भयो अब ? 'खाइ न पाइ छालाको टोपी लाइ'जस्तै भयो। न चिनेको छ, न जानेकै। तैपनि ऊसँग मेरो लभ पर्‍यो। उसलाई देखेको पलपछि मेरो मन-मस्तिष्कमा उसकै मुहार थियो। उसले ठुस्किँदै मेरो कानमा 'आँखा छैन ?' भनेको आवाज मात्र सुन्न थालेको थिएँ। त्यो पनि 'इको' इफेक्टमा। एकपटक सुनेपछि ३-४ पटक खै कताकता ठोक्किएर फेरि सुनिने।

उफ्, ती पलहरूमा साह्रै गाह्रो भएको थियो ! हो, सही सोच्नुभयो। म पागल नै भएको थिएँ त्यस 'आँखा छैन ?' भन्ने सुन्दरीको प्रेममा। उसका बारेमा केही थाहा नभएर म उसलाई 'आँखा छैन' सुन्दरी भन्ने गर्थें।

मलाई ऊसँग पहिलो नजरमै प्रेम त भयो, तर उसलाई पनि मसँग प्रेम हुनपर्‍यो नि ! अब उसका अगाडि गएर बन्दुक

तेर्स्याउँदै 'मैले तँसँग प्रेम गर्न थालें, त्यसैले अब तैंले पनि मसँग प्रेम गर्' भनेर भन्न त मिलेन। उसको मनको कुरा पनि त बुझ्नुपर्‍यो।

अकस्मात् एउटा आवाजले सुवास झसङ्ग हुन्छ।

"लौ न नि, मेरो फुटेको खप्पर ! आधा घण्टा भइसक्यो खाना पस्केर बोलाएर पर्खिएको। खाना चिसो भइसक्यो। यो मान्छे कता बेपत्ता हो ? आफूलाई कस्तो भोक लागिसक्यो !" सुवासकी श्रीमती सरू किचेनबाट रिसाएको आवाजमा चिच्याउँदै थिई।

हो, सही पढ्नुभयो - सुवासकी श्रीमती सरू। सुवासको 'माइ काइण्ड अफ गर्ल'वाला, जसलाई देख्नेबित्तिकै उसका आँखाअगाडि पुतली उडेको थियो र उसको मनमा मयूर 'छमछमती' नाचेको थियो। हो त्यही सरू। त्यो आवाजले झस्किएपछि सुवासले मनमनै सोच्छ, "उफ्, भुसुक्कै निदाएछु ! एकछिन सपनामा पनि आनन्दले बस्न दिन्न यसले। केही कुरा उसले भनेको जस्तो भएन या केही बेर समय लाग्यो भने मासु खान्छे मेरो ! हे प्रभु ! कहाँ फसें म ?"

# भाग ३

टिरिङ. टिरिङ...

फोनको घण्टी बज्छ ।

सुवासले फोन उठाउँदै भन्छ, "हेलो !"

उताबाट आवाज आउँछ, "लागिरहेको छ, यसपालि प्रेम भएरै छोड्छ । आज राति सपनामा मैले आफूलाई बर्बाद भएको देखेको छु ।"

सुवास : (त्यो आवाज सुनेर हाँस्दै) हा.हा.हा. साहिल ! के छ हाउडे ? कहाँबाट सम्झिस् ?

साहिल : कहाँ पाइन्छ र आजकाल सम्झिने मान्छे ? सबै आउँछन्, सम्झाएर मात्र जान्छन् । अनि तँलाई थाहा छैन, मुटुमा बस्नेहरू अक्सर जिन्दगीमा हराउने गर्छन् ? कहाँबाट सम्झिस् रे ? फोन गरिराछु । मतलब पक्कै आँखाबाट सम्झिएको होइन होला के रे ! फोनबाट सम्झिएँ ।"

साहिल, सुवास, रजनी र आभास कलेजका एकदमै मिल्ने साथीहरू हुन् । अघि भनेका अरू दुई जना मिल्ने साथीहरूमा साहिल पनि एक हो । अर्की रजनी ।

सुवास : (साहिलको उत्तर सुनेर हाँस्दै ) हा.हा.हा. गधा ! तँसँग बोल्न कसले पो सक्ला र ?

साहिल : सकोस् या नसकोस् मलाई मतलब भएन । म पनि कसैलाई वास्ता र विश्वास गर्दिनँ । अरूको के कुरा, मैले म आफैँलाई त विश्वास गर्दिनँ । कति बेला कसको मायामा फ्याट्ट परिन्छ आफैँलाई थाहा छैन ।

सुवास : हा.हा.हा. !

साहिल : राम्ररी सुन् । भोलि शुक्रबार हामी चारै जना धेरैपछि फेरि गेटटुगेदर गर्ने योजना बनेको छ । नगरकोट जाने रे । आभास र रजनीसँग कुरा भएर फिक्स भइसक्यो । तँ दु:खी आत्मालाई पनि एकपटक सोधेर फिक्स गरौँ भनेको ।

सुवास : ए हो र ! ठीक छ, म मिलाउँछु नि ! तँचाहिँ के गरिरहेको छस् नि ?

साहिल : के गर्नु ? आजको राशिफलमा उचाइ छुने योग छ भन्थ्यो । बिहानैदेखि घरकाले पङ्खा र जालो सफा गर्न लाएर हैरान छ यार !

सुवास : हा.हा.हा. हरे ! अनि अस्ति नै त अब घरमा बस्दिनँ, म केही गर्छु भनेर संसार जित्न हिँडेको थिइस् त ?

साहिल : उता जा, कहिलेको कुरा सम्झेको के यसले ! गएको थिएँ नि, तर मम्मीले फोन गरेर घरमा मासु पाकेको छ, आइज भन्नुभयो । अनि मासु खान फर्किएँ नि ।

सुवास : हा.हा.हा ! के रे ? मासु खान फर्किएँ रे ! अति भनिस् के यो । हा.हा.हा. !

साहिल : अत्ति-सत्ति थाहा छैन मलाई, तर त्यो करोडौंमा एक भन्छन् नि, हो त्यही हुँ म । हि.हि.हि. !

सुवास : है ? करोडौंमा मात्र होइन गधा ! तँजस्तो त अरू कोही छैन होला यस संसारमा । अति 'स्विट' छस् तँ !

साहिल : ओहो ! सबैले स्विट भनेको देख्दा त घरबाट बाहिर निक्लन नै पो डर लाग्न थाल्यो ।

सुवास : किन नि ?

साहिल : कमिलाले लग्ला कि भनेर नि ! हि.हि.हि. !

सुवास : छ्या ! हा.हा.हा. यसको कुरा पनि के हो के ! अनि आजकाल सिङ्गल नै छस् कि कोही गर्लफेण्ड छ ?

साहिल : सायद फूलहरूको कमी भएर होला, आजकाल पातहरूको भाउ बढेको छ । अस्ति नै केही समयअगाडि प्रेमको गहिराइमा डुब्नुपर्‍यो भनेर डुबुल्की लगाएको थिएँ । नाक-मुखबाट पानी पसेर धन्नै मरिनँ । चड्कन दिनुपर्ने त्यसलाई धड्कन दिएर गल्ती गरेछु ।

सुवास : हा.हा.हा ! किन, के भयो त्यस्तो ?

साहिल : के हुनु नि ! त्यसले मलाई हावा भन्थी, तर त्यसलाई नै अर्कैले पो उडाएर लग्यो, हा..हा..हा.. ! त्यसैले मेरा अगाडि गर्लफेण्ड-सर्लफ्रेण्डको कुरा नगर् अबबाट । आजकाल किचकन्या भनेको कन्या शब्दले पनि सात्तो जान्छ मेरो ।

सुवास : हा.हा.हा ! ल ल, अनि नगरकोटमा भोलि कति बजे कुन ठाउँमा भेट्ने हो ?

साहिल : त्यही पहिलाकै रिसोर्टमा ठ्याक्क चार बजे है,

अनि पर्सि फर्किने रे ।

सुवास : ए ल ल ! साहिल, अब अरू कुरा भेटेर नै गरौँला है ।

साहिल : हुन्छ । अनि सरूलाई पनि सँगै लिएर आइज रे ।

सुवास : ओके, ल त अहिलेलाई बाइ ।

साहिल : बाइबाइ ।

# भाग ४

"हामी मानिसको प्रकृति अनुसार प्रायःजसो के हुने गर्छ भने नि, प्रेमको नाममा हामी आफ्नो पार्टनरलाई म्यानुपुलेट र कन्ट्रोल गर्ने कोसिस गर्छौं । हामीले गर्ने सबैभन्दा ठूलो गल्ती यही हो ।" नगरकोटको रिसोर्टमा बियरको चुस्की लिँदै आभासले साहिलसँग भन्दै थियो । सुवास, सरू र रजनी आइसकेका थिएनन् । उनीहरू दुई जना मात्र प्राकृतिक सुन्दरताको अवलोकन गर्दै आफ्ना साथीहरूको प्रतिक्षा गर्दै थिए ।

साहिल प्रश्न गर्छ, "आफ्नो पार्टनर राम्रो होस् भनेर सबैले चाहन्छन् नि ! अनि उसलाई पर्फेक्ट बनाउन खोज्दा चाहिँ कसरी गल्ती हुन्छ हँ, आभास ?"

आभास : सुन् साहिल ! यो कुरा बुझ्नैपर्छ कि हामीले कहिल्यै पनि आफ्नो पार्टनरलाई पर्फेक्ट बनाउन सक्तैनौं । न त हाम्रो पार्टनरले हामीलाई नै बनाउन सक्छ । आफ्नो पार्टनरको बानी र सोच परिवर्तन गर्दैमा हाम्रो सम्बन्धमा आइरहेका समस्याहरू कम हुन्छन् होला भनेरे सोचिरहेका छौं

भने हामी बिल्कुलै गलत सोचिरहेका हौं । पहिलो कुरा त कुनै पनि मानिस पर्फेक्ट हुँदैन । अर्को कुरा, न त उसलाई जबर्जस्ती पर्फेक्ट नै बनाउन सकिन्छ । हामीले यो सत्यलाई स्वीकार गर्नैपर्छ । त्यसैले हामीले यो संसारमा जोसुकैसँग प्रेम गरौं, त्यस मानिसमा केही न केही कमी अवश्य लाग्छ र त्यही कमी हामीलाई ठ्याम्मै मन पर्दैन ।

साहिल : त्यही त ! हो, मलाई पनि रिलेशनसिप भन्नेबित्तिकै सबैभन्दा डर लाग्ने कुरा यही हो । आफूले सोचेको जस्तो भएन भने के गर्ने भन्ने सोच आउँछ । सबैमा कमी भइहाल्छ । जुन प्राकृतिक कुरा पनि हो । तैपनि मनमा डर हुने के ! अनि मेरो पहिलाको गर्लफ्रेण्डले यही कुरा नबुझेकाले सधैं अरूसँग तुलना गरेर धेरै गुनासो गर्थे । म अरूजस्तो किन बनौं ? अरूले जस्तो किन गरौं ? जबकि अरूले पनि त मैले जस्तो गर्दैनन् र मजस्तो छैनन् नि ! होइन र ?

आभास : हो, ठीक भनिस् । यदि पानीमा डुङ्गा चलाउन आउँछ भने तँलाई जुनसुकै डुङ्गा दिए पनि मजाले चलाइदिन्छस् । तँलाई डुङ्गा चलाउनै आउँदैन भने तैंले आफैंले जस्तोसुकै डुङ्गा परिवर्तन गर् या चाहे अरूले तँलाई जतिसुकै राम्रो डुङ्गा किन नदिऊन्, त्यसलाई पानीमा कदापि चलाउनै सक्तैनस् । त्यसैले सबैभन्दा पहिला हामीले बुझ्नुपर्छ, डुङ्गा चलाउन नसिकेसम्म हाम्रो कुनै पनि आइडियाले काम गर्दैन । ठ्याक्कै यही कुरा हाम्रो रिलेशनसिपमा पनि लागु हुन्छ । चाहे कुनै पनि बहाना देखाएर जतिसुकै रिलेशनसिप चेन्ज गरौं, रिलेशनसिप चेन्ज गर्दैमा प्रब्लमहरू सकिनेवाला

छैनन् । किनभने प्रब्लम रिलेशनसिपमा या हाम्रो पार्टनरमा होइन, हामीभित्रै छ । आफ्ना सम्बन्धहरूमा आएका समस्याहरू सुल्झाउन सक्ने क्षमता हामीभित्र अझै पनि विकास भइसकेको रहेनछ भनेर स्वीकार नगरेसम्म मैले जतिसुकै रिलेशनसिप चेन्ज गरे पनि त्यस रिलेशनसिपमा ढिलो-चाँडो समस्याहरू आउने नै छन् ।

साहिल : अँ के ! त्यही भएर पो रहेछ, रिलेशनसिप जतिसुकै लामो भए पनि मानिस दुःखी हुने । आफूले त्यो कुरा स्वीकार्न नसकेर भाग्यलाई दोष दिने, अनि बाहिरबाहिर हाँसे पनि भित्रभित्रै गुम्सिने, छट्पटाउने । आफ्नो पार्टनरसँग चित्त नबुझिरहेको हुने । त्यही भएरै होला प्रायःलाई आफ्नो पार्टनरमा केही या धेरै कमीहरू छ जस्तो लाग्ने । बल्ल पो बुझेँ म्याकुरी ! त्यही भएर पो मेरो भूपू मायालु दुःखी आत्माले जति बेला पनि मलाई अरूसँग तुलना गर्दै, जज गर्दै खाली गुनासो गर्ने रहिछ । बिचरीलाई खुसी खोज्न अन्त जानुपर्दैन, त्यो हामी आफैँभित्र छ भनेर कसले सिकाइदेओस् ?

आभास : हो, सही भनिस् । खुसी हामी आफैँभित्रै छ, अन्त खोज्न जानुपर्दैन । त्यसैले चाहे जतिसुकै रिलेशनसिप चेन्ज गरे पनि केही हुनेवाला छैन । हामीले आफ्नो समझदारी नबढाएसम्म प्रब्लमहरू फेस गर्नैपर्ने हुन्छ । प्रायःजसो हामी पर्फेक्ट रिलेशनसिप खोज्दै बस्छौँ, तर वास्तवमा भन्नुपर्दा हाम्रो समझदारी र विवेक नै महत्त्वपूर्ण तत्त्व हो । यसले जस्तोसुकै रिलेशनसिपलाई पनि पर्फेक्ट रिलेशनसिप बनाइदिन्छ ।

साहिल : हुन त हो के रे ! तर एक जनाले मात्र यो कुरा बुझेर नहुने । ताली एक हातले मात्र नबज्ने रहेछ । छ्या, बरु त्यो चाउचाउ, बिस्कुट, म:म मनपर्ने उमेर नै ठीक ! यो अर्काका छोराछोरी मनपर्ने उमेर ठीक लागेन मलाई । त्यो मेरो भूपू मायालुले कति केके भन्दा पनि सहेर बस्थेँ यार म ! क्या माया लाग्थ्यो भन्या त्यसको मलाई !

आभास : अनि किन टाढा भइस्, ब्रेकअप गरिस् त त्यस्तो माया गर्नेले ?

साहिल : केको मैले छोड्नु नि ! सबैले मलाई छोड्दा रहेछन् । छ्या, कति ग्वाँच थिएँ यार पहिला !

आभास : मैले नचिन्नेवाला गर्लफ्रेण्ड हो ?

साहिल : अँ ।

आभास : त्यसो भए के भएको थियो भन् न त ?

साहिल : के हुनु नि ! म सोच्थेँ, उनी र अरू सबै मेरो आफ्नै हुन् । निद्राबाट झल्याँस्स ब्युँझिएपछि थाहा पाएँ, सबै सपना रहेछ । आफ्ना लागि आफूबाहेक कोही नहुँदो रहेछ । मैले उसले भनेको मानिनँ रे ! चेन्ज भइनँ रे ! यहाँ मान्छेले लामखुट्टे मार्न नसकिरहेको बेलामा उसको माया मारेँ रे ! पहिलाभन्दा माया कम गरेँ भन्दै तनाव दिन्थी । तैपनि म केही नबोली सहिदिन्थेँ । 'माया त्यो सागर हो, जहाँ बुद्धि सधैं डुब्ने गर्छ' भनेझैं मेरो बुद्धि पनि त्यो मोरीको मायामा चुर्लुम्म डुबेको थियो । उसका बुबाआमाले 'नानु, छोरी, टाइममै खाना खाऊ' भन्दा झर्केर 'म बच्चा होइन' भन्ने उसले मैले चाहिँ 'बेबी खाना खायौ' भन्दा 'हाउ केयरिङ' भन्दै मसक्क पर्थी ।

उसको दुईवटा अनुहार त देखिरहेकै थिएँ, तैपनि मोबाइल डार्क मोडमा राख्दासम्म त ठीकै थियो, तर आफ्नो सोच र नियतलाई पनि डार्क मोडमा राख्न थालेपछि चाहिँ फसाद पऱ्यो ।

जस्तोसुकै उचाइमा गए पनि गिद्धको आँखा सिनोमा नै हुन्छ भनेझैँ उसले मेरो त्यस्तो चोखो मायाको इज्जत गरिन । त्यसमाथि तुलना र गुनासो गरेर हैरान पार्थी । त्यसैले सम्बन्धमा अमिलोपन आउन सुरु भयो । केटीलाई हामीले इज्जत गर्नुपर्छ, त्यो मलाई राम्ररी थाहा छ, तर यसको मतलब उसले जे गरे पनि उसको पैँताला नै चाट्नुपर्छ भन्ने त छैन नि ! होइन त ?

आभास : हो नि । हदभन्दा बढी कसैलाई माया र इज्जत दिन लाग्यौँ भने उनीहरूले हाम्रो कदर नै गर्न छाडिदिन्छन् । त्यसैले यो बुझ् कि सूर्यले बादललाई होइन, बादलले सूर्यलाई छेक्छ । किनभने बादल सूर्यभन्दा तल हुन्छ । त्यसैगरी तँलाई जज गर्ने, तुलना गर्ने, गुनासो गर्ने र अवरोध पुऱ्याउनेहरू पनि सधैँ तँभन्दा तल हुन्छन् - सोचले, विचारले र व्यवहारले ।

साहिल : त्यही त । कोही ढुक्क छन् किनभने उनीहरूसँग सम्पत्ति छ । कोही ढुक्क छन् किनभने उनीहरूसँग डिग्री छ । म पनि त ढुक्क छु नि, किनभने मसँग विश्वास छ यार ! अनि किन दबाब दिनु मलाई फलानो-ढिस्कानो, यस्तो-उस्तो बन्नुपर्छ भन्दै ? अनि मलाई किन अरूसँग तुलना गरेर जज गर्दै गुनासो गर्नु ? खुबी हेरेर मन पराउनु आकर्षण हो, तर कमी

थाहा पाएर पनि मन पराउनु पो प्रेम हो त !

आभास : सही भनिस् । अनि यस्तै कुरा नबुझ्दा नै मानिसभित्र पलाउने इगोले रिलेशनसिपलाई खत्तम पारिदिन्छ यार !

साहिल : त्यही त ! उफ्, टाउको दुखाउनेहरू धेरै छन् यहाँ, तर सिटामोल किनेर आफैँले खानुपर्छ । कसलाई के भन्नु यार ! मान्छेहरू अनुहार हेरेर 'रिप्लाइ' गर्छन् अनि भन्छन् - लुक्स डजन्ट म्याटर । कसको पो विश्वास गर्नु खै ?

आभास : हो त । आमाबुबालाई वृद्धाश्रममा छोडेर मानिसले आफ्नो गाडीपछाडि 'आमाबुबाको आशीर्वाद' लेखेर हिँडेको त देखेको छु, अरू त के कुरा !

साहिल : हो नि यार ! विश्वास नि कसको गर्नु खै ! यहाँ कपाल नै नहुनेहरू पनि 'बालै फरर' भन्दै हिँड्छन् । हा.हा.हा... !

आभास : हा.हा.हा.. कुरा कहाँ पुगेछ है ! बरू त्योसँगचाहिँ के भयो भन् न । कसरी ब्रेकअप भयो ?

साहिल : ह्या.. त्यसको कुरा सम्झिनै मन लागेन । तैपनि छोटकरीमा सुन् ! सुन्दरतामा पि.एच.डी गरेकी, तर व्यवहारमा एस.एल.सी. फेल थिई ऊ । मैले एक दिन कति सहनु भन्ने लागेर त्यही झोँकमा भनिदिएँ - 'बेबी, तिमीले अलिकति मेकअप पनि खाने गर न प्लिज, तिम्रो रूपजस्तै मन पनि राम्रो हुन्थ्यो कि ? अनि त के चाहियो र ? उसले जे भन्दा पनि मैले सहन्थेँ, तर मैले यस्तो भन्दा ऊ बिच्किहाली ।

आभास : हा.हा.हा. ! त्यसैले त म भन्ने गर्छु त, महिलाहरू सुनेको भरमा प्रेम सम्बन्धमा पर्छन् अनि पुरुषहरू देखेको भरमा । त्यही भएर त महिलाहरूले मेकअप लगाउँछन्, अनि पुरुषहरू झुटो बोल्छन् । तैँले त्यो सुन्दर केटी देखेर पहिला सम्बन्ध सुरु गरिस् । पछि अर्कै फेला पारिस् त्यो सुन्दर रूपपछाडि । त्यसैगरी ऊ पनि तेरो मीठो बोली सुनेर फसी । पछि तैँले एकपटक मात्रै उसका बारेमा नराम्रो बोल्दा तर्की हाली । हा.हा.हा. ! अनि आजकाल कहाँ छे त ? कुरा हुन्न ?

साहिल : हुन्न । किन हुनुपऱ्यो र ! स्कुलमा हुँदा 'म त नेपालको माया गर्ने छोरी, मलाई हिउँजस्तै माया चाहिन्छ' भन्ने गीतमा खुब नाच्ने त्यो केटी अहिले बिहे गरेर डिपेन्डेन्ट भिसामा अष्ट्रेलिया गई रे !

आभास : हा.हा..हा..हा..हा... !

के हो यार ! एकछिन पनि नपर्खी सुरु गरिसकेको ? (साहिल र आभास आफ्नो पछाडि सुवासको आवाज सुनेर एकैपटक फर्केर हेर्छन् । सुवास र सरू मुस्कुराउँदै उनीहरू भएतिर आउँदै थिए । त्यो देखेर साहिलले भन्छ -

साहिल : आइज आइज, दुःखी आत्मा ! तेरो नै कमी थियो यहाँ । हा..हा..हा. ! कति ढिलो आएका तिमीहरू ?"

सुवास : अँ यार ! कोटेश्वरको जाममा नराम्रोसँग फसियो ।

आभास : ओहो, जाम छ त्यस्तो ? अघि हामी आउँदा त थिएन । साहिल मेरो मोबाइल उता चार्जमा छ, तेरो मोबाइलबाट रजनीलाई फोन गर् त । कहाँ आइपुगी सोध् !

साहिल : ल पख् !

# भाग ५

सुवासले त्यो केटीलाई आफ्नो मनको कुरा भन्न र ऊसँग कुरा गरेर उसको मनको कुरा बुझ्न कलेजमा धेरै खोज्छ । तर कतै भेट्दैन । निराश भएर ऊ आभास भएको ठाउँमा जान्छ र निन्याउरो अनुहार बनाउँदै बस्छ । उसको अँध्यारो अनुहार देखेर आभासले सोध्छ ।

आभास : ओइ, के भयो ? तेरो अनुहारमा पूरै लोडसेडिङ भइरहेको छ त ?

सुवास : (मुखले लामो सास बाहिर फाल्दै) खै, के भयो भयो, म आफैँले थाहा पाइरहेको छैन यार !

आभास : भन् न । कस्तो गधा रहेछ !

सुवासले युवतीसँग ठक्कर खाएदेखि अहिलेसम्मको सबै कुरा भन्छ ।

आभास : हा.हा.हा.. ! अनि तँलाई त्यति जाबो कुरामा पनि उदास हुनुपर्छ त गधा ! हामी कति नै छौं र यो कलेजमा ? मुस्किलले पाँच सय । अनि यति थोरै मानिसहरूबीच एक-दुई दिन लागे पनि त्यो केटीलाई खोजिहालिन्छ नि । त्यसैले

हाँस्दै गर् । उदास हुनाले जिन्दगीको कुनचाहिँ समस्या समाधान हुन्छ र ? हजारौँ ठक्कर खाएपछि पनि सुनौलो रूप जसले फेर्न सक्छ, त्यही वस्तु अनमोल बन्छ बुझिस् । प्रकृतिले हामीलाई यही सिकाउँछ । अब यो भन्, तँलाई त्यो केटीसँग माया नै भएको हो कि मोह मात्रै हो ?

सुवास : कस्तो माया कि मोह ? बुझिनँ ।

आभास : माया र मोहमा कहिल्यै झुक्किनुहुन्न बुझिस् । माया त्यो हो, जुन निःशर्त हुन्छ । अनि मोह त्यो हो, जहाँ केही कुराको स्वार्थ लुकेको हुन्छ ।

सुवास : हरे ! केको मोह हुने हो ? माया नै हो यार ! पहिलो नजरमा बसेको प्रेमको निश्चल माया । सुन्दर रूपले भन्दा सुन्दर मनले जीवन सुन्दर हुन्छ भन्ने मलाई राम्ररी थाहा छ । त्यसैले म उसको रूप, रङ या शरीरतिर आकर्षित भएको होइन । मैले चाहेर पनि उसका बारेमा सोच्न बन्द गर्न सकिरहेको छैन । म उसको कल्पनामा यति मस्त हुन्छु कि मानौँ मेरो मन-मस्तिष्क सबै उसैले कब्जा गरिसकी । त्यसैले जतिसुकै ऊभन्दा राम्री र आकर्षित केटीहरू मेरो अगाडि भए पनि मलाई मतलब लाग्न छोडिसक्यो । ऊबाहेक अरू केटी देख्दिनँ म । ऊसँगै मात्र मेरो सारा संसार बाँड्न चाहन्छु । उसलाई कुनै पनि हालतमा खुसी राख्न चाहन्छु । हरपल ऊ खुसी भएको देख्न चाहन्छु । उसले भनी भने अब म उसका लागि जे पनि गर्न सक्छु । गरिबबाट धनी पनि बनिदिन्छु या जे पनि गरिदिन्छु ।

आभास : लौ न नि, केटो त गएछ ! यसको त सच्चा प्रेम

भएछ, हा.हा.हा.. ! अब हामी त्यो केटीलाई जसरी पनि खोज्नेछौँ । तँ निर्धक्क बन् । तर एउटा कुरा थाहा पाइराख् ।

सुवास : के कुरा ?

आभास : म सधैँ खुसी हुन्छु । थाहा छ किन ?

सुवास : किन ?

आभास : किनभने म कुनै आशा नै राख्दिनँ । न कोहीसँग, न केहीसँग । त्यसैले त्यस केटीका बारेमा धेरै हावामा अहिले नै नउड् । पछि जमिनमा पछारिनुपर्ला । पहिला उसलाई खोजौँ र उसको मनको कुरा बुझौँ । अनि मुख्य कुरा, उसको जीवनमा अरू कोही केटा नहोस् भनेर प्रार्थना गरौँ । हा.हा.हा.. !

सुवास : त्यही त है । यदि उसको जिन्दगीमा अरू कोही केटा रहेछ भने त..

आभास : (सुवासको कुरा बीचमै रोकेर) त्यस्तो भयो भने तेरो चङ्गा चैट ! टाइटाइ फिस्, हा.हा.हा.. ! हिँड् क्यान्टिन जाम् । मलाई भोक लाग्न थाल्यो ।

सुवास : 'कसलाई केको पीर घरज्वाँइलाई खानैको पीर' भनेको जस्तो । आफूलाई यहाँ यस्तो छट्पटी भइरहेको छ, ऊचाहिँ खान जाम् रे ! कस्तो हन्ते रहेछ ! तैँ खा, मलाई भोक छैन । म कफी मात्र पिउँछु ।

आभास : अब कहाँ भोक लाग्छ त तँलाई ! लभ पर्दा भोक, प्यास, निद्रा सबै उड्छ रे ! हो रहेछ है पागलप्रेमी ! हा.हा.हा.. !

सुवास : चुप लाग् । धेरै नजिस्का । हिँड् जाम् ।

******

"ए दाइ ! एक प्लेट समोसा-तरकारी अनि दुईवटा कफी है ?" आभासले क्यान्टिनमा खानेकुरा अर्डर गर्छ र सुवाससँगै कुर्सीमा गएर बस्छ । आफ्नो मोबाइल खल्तीबाट झिक्दै फेरि सुवासलाई जिस्काउन सुरु गर्छ ।

आभास : भनेपछि अब त्यही केटी नै मेरी भाउजू हुने भई, होइन त ?

सुवासले केही बोल्न मुख खोलेको मात्र के थियो । त्यत्तिकैमा उसको पछाडिबाट एक परिचित सुमधुर आवाज आउँछ, "हेलो आभास !"

कसैले आफूलाई सम्बोधन गरेपछि उसले त्यस आवाजतिर हेर्दै भन्छ, "ओहो सरू ! के छ खबर ? आऊ बस... कफी ?"

सरूले त्यस निमन्त्रणालाई स्वीकार्दै आभास सँगैको कुर्सीमा टक्क बसेकी मात्र थिई, उनलाई देखेर सुवास तीन छक्क खान्छ र आँखा नै नझिम्क्याइ टुलुटुलु हेर्न थाल्छ ।

सुवासको त्यस प्रतिक्रियाबाट अनभिज्ञ आभासले पहिला सरूका लागि कफी अर्डर गर्छ, अनि सुवासतिर फर्कँर सरूलाई भन्छ :

आभास : सरू, ऊ मेरो बेस्टफ्रेण्ड सुवास है ।

उसले त्यही बेलामा सुवासलाई नोटिस गरेर उसको कानननजिकै गएर भन्छ, "ओइ, के भयो ? किन अनुहार

त्यस्तो बनाएको ?"

सुवास : (आफूलाई सम्हाल्दै) केही होइन । हेलो सरू !

सरू : (डिच्च हाँस्दै) हेलो सुवास !

त्यसपछि सरू फेरि आभासतिर फर्किंदै रूष्ट आवाजमा भन्छे -

सरू : के हो आभास ! फोन पनि उठाउनु छैन । म्यासेजको पनि रिप्लाइ छैन । हाम्रो केही मतलब नै छैन है ?

आभास : (सरूलाई भन्छ) त्यस्तो होइन ! म मोबाइल त्यति चलाउँदिन यार ! आजकाल काम र पढाइमा यति व्यस्त छु कि अन्ततिर ध्यान दिनै सकिरहेको छैन ।

सरू : त्यस्तै हो । समयसँगै सबै कुरा परिवर्तन हुन्छ भन्ने थाहा थियो, अनि आज देखियो पनि ।

आभास : (हाँस्दै) हा.हा.हा.. ! त्यति सारो नि होइन ल ? मैले मिसकल या म्यासेज देखेपछि नजिकका हरूलाई चाहिँ गर्छु ल ! हा.हा.हा.. !

त्यतिकैमा सुवासले आभासको काननजिकै गएर भन्छ -

सुवास : ओइ, एकछिन उता हिँड् त । तँसँग एकान्तमा अर्जेन्ट काम पऱ्यो । आफूलाई यहाँ कस्तो गाह्रो भइसक्यो ।

यति भनेर ऊ कुर्सीबाट जुरूक्क उठेर जान्छ । एक्कासि के भएछ भनेर जान्न उत्सुक भएर आभासले सरूसित भन्छ -

आभास : सरू ! एकैछिन है, म आइहालेँ ।

सरू : ओके ।

सुवास जान्छ ।

****

आभास : के भयो ओइ ?

सुवास : (भूमिका बाँध्दै) के हुनु नि यार ! म त कस्तुरी-मृग भएछु । म जुन बास्नालाई जङ्गलभरि भौतारिँदै खोजिरहेको थिएँ, त्यो त मेरै नाभिबाट आएको रहेछ !

आभास : (झर्किँदै) के भन्छ ? सिधासिधा भन्न बुझ्ने गरी । यत्तिकै अर्कालाई अत्याइदिएर पापी !

सुवास : (एकदमै खुसी हुँदै) मेरो भाइ ! सरू त्यही अघि मैले भनेको केटी हो । मेरो सपनाकी राजकुमारी ! उसलाई मैले कता मात्र खोजिनँ । लास्टमा त ऊ मेरो यारको पो यार रहिछ । जोबिना अब म बाँच्नै सक्तिनँ । माइ काइण्ड अफ गर्ल ।

आभास : (केही बेर सोचेपछि) ल...ल...पीर नगर् । म केही गर्छु । अहिले चाहिँ हिँड् । सरू कुरिरहेकी छ । उसको अगाडि केही नभन्, चुप लागेर बस् । म केही बाटो निकाल्छु ।

सुवास : (रमाउँदै) हुन्छ, म केही भन्दिनँ यार ! तँ एक जना त छस् यो संसारमा, जसलाई म अनाथले आफ्नो भन्न सक्छु । विश्वास गर्न सक्छु । (नाँच्दै) सबैभन्दा माथि छ, मेरो एउटा प्यारो आभास साथी छ ।

# भाग ६

साहिल : (गम्भीर हुँदै) म एउटा कुरा फिटिक्कै बुझ्न सक्तिनँ भन्या - जोसुकैसँग म रिलेशनसिपमा बस्ने कोसिस गरौं, मैले केटीलाई बुझ्न नसकेको हो कि उसले मलाई ? मैले जतिसुकै कोसिस गरे पनि सुरुवातको केही समयपछि म त्यो रिलेशनसिपमा टिक्नै सक्तिनँ । किन हो ?

साहिलको कुरा सुनेर सुवास र आभास गहिरो सोचमा पर्छन् । तर सरूले कुरा नबुझेर हो कि किन हो साहिलतिर टुलुटुलु हेर्दै बस्छे । त्यो देखेर आभासले सबैको ध्यान आफूतिर केन्द्रित गर्न भन्छ -

आभास : हामी कसैले पनि महिला र पुरुषबीचको प्राकृतिक भिन्नता बुझ्नै चाहन्नौं । त्यसैले गर्दा यस्ता समस्याहरूको सामना गर्न परिरहेको हुन्छ ।

साहिल : कस्तो प्राकृतिक भिन्नता र ?

आभास : उनीहरूको प्रकृति, उनीहरूले गर्ने व्यवहार, परिस्थितिहरू सामना गर्ने र सुल्झाउने तरिका सबै एकदमै फरक हुन्छ भनेर हामी बुझ्नै खोज्दैनौं । यही कारणले

सम्बन्धहरूमा निराशापन बढ्दै गएर एकदमै समस्याहरू आउने क्रम ह्वात्तै बढ्दै गएको छ। अनि झगडामा माया फिल नहुने हुन्छ। यसले गर्दा धेरैको जिन्दगी खराब भइसक्यो।

सरू : कस्ता खालका फरकहरू आभास ? हामी पनि बुझम् न।

आभास : (गम्भीर हुँदै) ल सुन... हामीलाई लाग्छ, सबै परिस्थितिहरूमा हाम्राअगाडि भएको मानिसले पनि हामीले जस्तै प्रतिक्रिया र व्यवहार गर्नुपर्छ। जब त्यस अगाडिको व्यक्तिले केही अलग गर्न थाल्छ, त्यस कुराले हामीलाई रिस उठ्छ। (साहिलतिर फर्किंदै) साहिल ! तैंले त्यो केटीलाई मेकअप खाऊ भन्दा उसलाई त्यही भएको हो। अनि ऊ रिसाई र तँसँग ब्रेकअप गरी।

सुवास : को केटी ?

साहिल : छोड् न अहिले त्यो कुरा। पछि भन्छु... अनि भन् न, आभास !

आभास : महिलाहरूले उनीहरूले जस्तै सोचून्, उनीहरूजस्तै बोलून या त्यस्तै प्रतिक्रया देखाऊन् भनेर पुरुषहरू चाहन्छन्। पुरुषहरूले पनि उनीहरूले जस्तै फिल गरून्, त्यस्तै नै बोलून् र प्रतिक्रिया देखाऊन् भनेर महिलाहरू चाहन्छन्। जुन धेरैजसो समय सम्भव नै हुँदैन। महिला र पुरुषले अलगअलग तरिकाले सोच्ने कुरा प्राकृतिक हो र हामीले त्यही साधारण कुरा भुलेको भएर आज प्रायः सबैको रिलेशनसिपमा समस्याहरू आइरहेका छन्। (सुवासतिर फर्किंदै ) ल भन् त, सुवास ! जब तँलाई तनाव हुन्छ या समस्या पर्छ, तँ के गर्छस् ?

सुवास : (एकैछिन सोचेपछि) अँ, म त्यस कुरालाई सकेसम्म कसैलाई भन्दिनँ । आफैँले सुल्झाउने प्रयास गर्छु । केही गरी आफूले सकिनँ भने मात्र आफूभन्दा कोही बुद्धिजीवी या चलाख मानिसकहाँ गएर सल्लाह लिन्छु । समाधान खोज्ने प्रयास गर्छु ।

आभास : हो, ठीक भनिस् । तँ मात्र होइन, हामी सबै पुरुषहरूले त्यही गर्ने गर्छौं । हामी पुरुषहरूलाई आफ्ना समस्याहरू आफैँ सुल्झाउन सक्दा त्यसले हामीलाई शक्तिशाली फिल गराउँछ । साथै कसैलाई सल्लाह दिँदा या अरूको समस्या सुल्झाइदिँदा पनि हामीलाई सम्माननीय र राम्रो फिल गराउँछ, किनभने ती सबै हाम्रा लागि ठूला कुरा हुन् । महिलाहरूको परिप्रेक्ष्यमा भने यो कुरा एकदमै भिन्न हुन्छ । सरू, अब तिमी भन त ! तनावमा भएका बेला या तिमीलाई समस्या पर्दा तिमी के गर्छौ ?

सरू : (सोच्दै) अँ, मलाई त्यस्तो हुँदा म त्यसबारे आफ्नो मनले खाएको कोही व्यक्तिसँग सेयर गर्छु । त्यो व्यक्ति प्रायः सुवास नै हुने गर्छ ।

आभास : अनि तिमीले त्यस्तो गर्दा सुवासले चाहिँ के गर्छ ?

सरूले केही बेर घोरिएर सोच्छिन्, अनि बोल्छिन् -

सरू : मैले बोल्न सुरु गरेको केही बेरमै बीचमा प्वाक्क बोलेर उसले मलाई राम्राराम्रा सल्लाह र समाधानहरू दिन सुरु गर्छ, तर मलाई मेरो मनको सबै कुरा सेयर नगरी चित्तै बुझ्दैन । त्यसैले म फेरि त्यही बाँकी रहेका कुराहरू भन्न

सुरु गर्छु । सुवास सधैँजसो त्यस्तो बेलामा रिसाउने गर्छ या भनिसकेँ त, फेरि त्यही कुरा भन्छ । यस्तो, त्यस्तो, उस्तो भन्दै ठुस्किन्छ । यसले गर्दा हाम्रो झगडा पर्छ ।

आभास : (हाँस्दै) हो, तिमीहरूको मात्र होइन, प्रायः सबैजसो जोडीहरूकै त्यस्तै हुने गर्छ यही महिला-पुरुषबीचको प्रकृति नबुझ्दा । किनभने हामी पुरुषहरूलाई महिलाहरू आफ्ना समस्या या कुराहरू सेयर गर्न खोज्छन् भन्ने कुरा थाहै छैन । हामी जान्ने पल्टेर, उसलाई बीचमै रोकेर राम्राराम्रा उपायहरू सिकाउन या त्यसको हल दिन सुरु गर्छौं । महिलाहरूलाई सुझावको होइन, बरु त्यस्तो मानिसको जरूरत हुन्छ जसले उसको कुरालाई मान्यता देओस् भनेर हामी बुझ्दैनौं । महिलाहरू चाहन्छन्, पुरुषले उनीहरूको भावनालाई बुझोस् । उनीहरूलाई मज्जाले सुनिदियोस् मात्रै । यो कुरा नबुझी हामी पुरुषहरूले उनीहरूलाई सुझाव दिएपछि पनि जब महिलाहरू फेरि त्यही कुरा गर्न थाल्छन्, हामी पुरुषहरूलाई मन पर्दैन । हामी सोच्छौं - 'अरे बाबा, भनिसकेँ त ! सिकाइसकेँ त त्यत्रो । अझै फेरि त्यही कुरा गर्छे !' हामीलाई आफू सही रिजल्ट क्रियट गर्न नसक्ने बेकारको मानिसजस्तो लाग्छ । नराम्रो लाग्छ । हामी कुरै नबुझी रिसाउन सुरु गर्छौं ।

सरू : हो नि । कस्तो सत्य भन्यौ आभास तिमीले । हामी महिलाहरूलाई अरू केही चाहिँदैन त्यस्तो बेलामा । सिर्फ हाम्रो कुरा मज्जाले सुनेर, हाम्रो भावनाको कदर गरेर हामीलाई बुझिदिने मानिस चाहिन्छ । (सुवासतिर फर्किँदै) सुन्यौ नि, सुवास ?

सुवास : सुनैं नि । (आश्चर्य मान्दै) ओहो, यस्तो कुरामा त आजसम्म ध्यान गएकै थिएन ! एकदमै ध्रुवसत्य कुरा हो यो । त्यसैले पो रहेछ त, म तनावमा हुँदा या केही समस्या पर्‍यो भने त्यसबारे सोच्न, शान्त हुनका लागि एकान्तमा बस्न मन लाग्ने ।

सरु : अनि मलाई तनाव हुँदा या समस्या हुँदाचाहिँ आफ्नो कोही नजिकको मानिससँग ती सबै कुराहरू सेयर गर्न मन लाग्ने । हल्का र राम्रो फिल नभइन्जेल कुरा गरिराख्न मन लाग्ने ।

आभास : हो, ठ्याक्कै त्यही हुने हो । यो फरकलाई हामी महिला-पुरुष दुवैले नबुझेकै भएर पहिलादेखि नै हाम्रो समाजमा महिलाहरूको घाँटीमा रुद्रघण्टी हुँदैन र यिनीहरूको मनमा केही कुरा रहँदैन भनिएको हो । यिनीहरूसँग गोप्य कुरा गर्नै हुन्न भनिन्छ । यस्तो भनेर महिलाहरूको खिल्ली उडाउने समेत गरिन्छ । हाम्रा अग्रजहरूले जे सिकाएर गए, त्यसैलाई विश्वास गरेर त्यस्ता छेउ न टुप्पाको कुरालाई निरन्तरता दिइन्छ । हाम्रा अग्रजहरूले सिकाएका, भनेका सबै कुराहरूमा सत्यता कतिको छ भनेर त्यसबारे सोच्ने फुर्सद कसलाई नै छ र ? हामी सबै जना सम्पत्ति, गाडी, पद र प्रतिष्ठालाई मात्र जिन्दगी मानेर आधा जिन्दगी सर्टिफिकेट जम्मा गर्न र बाँकीको आधा जिन्दगी त्यसैको फोटोकपी गर्दै बिताउन अभ्यस्त छौँ । सधैँजसो एकैखाले एउटै प्याटर्नमा 'रोबोटिक लाइफ' बिताउन बानी परिसकेको छ र आफूपछिको पिढीँलाई समेत यस्तै भ्रमपूर्ण जीवनतिर लाग्न तालिम दिइरहेको

छौँ । यस्तै गर्नमा तल्लीन छौँ । अनि हामीलाई लाग्छ, 'हामीलाई सबै थाहा छ ।'

साहिल : (अचम्म मान्दै) ए आम्मै ! अनि त्यही कुरा नबुझ्दा पो रिलेशनसिपमा प्रायः महिला र पुरुषबीच मनमुटाव र झगडा परिरहने रहेछ ! या दुवै जनाले एक-अर्काको प्रकृति नबुझेको कारणले आफ्नो भावनाको कदर नभएको सम्झेर निराश हुने रहेछन् त । ए राता मकै !

आभास : हो नि । त्यस्ता परिस्थितिहरूमा पुरुषको प्रकृति शान्त रहेर समस्याको समाधान निकाल्ने या तनाव कम गर्ने हुन्छ । ऊ स्वभाविक रूपले शान्त हुन थाल्छ । त्यसको विपरीत महिलाको प्रकृति नै बोलिराख्नुपर्ने हुन्छ । उसले आफ्नो प्रकृति अनुसार नै पुरुषलाई शान्त हुन दिन्न, किनभने ऊसँग तनाव डिल गर्ने तरिका नै त्यही हुन्छ : कुरा सेयर गरेर, बोलेर, अनि आफ्नो फिलिङ्ग्स एक्सप्रेस गरेर ।

सुवासलाई यस कुराले एकदमै मन छुन्छ र आभासलाई बीचमै रोकेर आफू बोल्न थाल्छ -

सुवास : त्यही भएर पो हामी महिला-पुरुष दुवैले एक-अर्काको विपरीत अर्थात् उल्टो गर्न थाल्दा रहेछौँ । जसको कारणले महिलाहरूलाई लाग्न थाल्ने रहेछ - उसको पुरुष साथीलाई उसको फिलिङ्ग्सको केही मतलब नै छैन । उसले केही वास्ता गर्दैन । जो उसले त्यत्रो बोल्दा पनि चुप बस्छ । उसलाई बेवास्ता गर्छ । सायद मप्रति त्यस पुरुषको फिलिङ्स् कम भइसकेको छ या सायद अब उसले मलाई माया गर्दैन होला आदि । जुन कुरा म मेरी श्रीमती आदरणीय सरूज्यूको

मुखबाट बारम्बार सुन्ने गर्छु । हा..हा..हा.. !

सुवासले सरूतिर हेर्दै जिस्काउँछ । त्यो देखेर सरूले पनि तुरून्तै आफ्ना श्रीमान् सुवासतिर फर्किंदै जवाफ फर्काउँछे -

सरू : हो नि है ! अनि अर्कातर्फ हजुरलाई चाहिँ लागिरहेको हुन्छ कि हजुरले मेरो कुरा कत्ति धेरै सुन्नुहुन्छ । यसले केही महसुस नै नगरी कत्ति बोल्न सक्छे ! सधैँ तुलना, जज र गुनासो मात्र गर्छे ।

साहिलले पनि बीचमा प्याक्क बोल्छ -

साहिल : दुवैको यस्तो सोचले कुरा अझै बिगार्छ, अनि लास्टमा टाइटाइ फिस्, हा..हा..हा.. !

साहिलको कुरा सुनेर सबै जना एकैपटक गल्लल हाँस्छन् ।

# भाग ७

सुवासको मोबाइलको घण्टी बज्छ। मोबाइलको स्क्रिनमा आभासको नाम देखेर फोन उठाउँछ।

सुवास : हेलो।

आभास : ओइ, कहाँ छस् ?

सुवास : कलेजमै छु यार !

आभास : त्यसो भए झट्ट क्यान्टिनबाहिर आइज त, काम छ।

सुवास : ओके ! पख्, म आइहालेँ।

****

क्यान्टिनबाहिर दुई जनाको भेट हुन्छ। आभासले खुसी हुँदै हतारहतार भन्छ -

आभास : ओइ, एउटा गुड न्युज छ।

सुवास : यस्तो अत्तालिँदै भन्नुपर्ने के न्युज रहेछ, सुनम् त !

आभासले सुवासलाई खुसीले अँगालो हाल्दै भन्छ।

आभास : सरूले तँसँग भेट्न तयार भएर टाइम दिएकी छ ।

त्यो सुनेर सुवास खुसीले अत्तालिँदै बोल्छ ।

सुवास : साँच्चै ? कसरी भेट्न मानी ? के भनिस् तैँले ?

आभास : मैले सबै कुरा भनिदिएँ ।

सुवास : के कुरा ?

आभास : एकदमै सिरियस छ सुवास तिम्रा बारेमा । मैले उसलाई राम्ररी चिन्छु । उसले कहिल्यै हावा कुरा गर्दैन । सरू, तिमीले मलाई राम्रो साथी मान्छौ भने मेरो विश्वास गर, सुवासले तिम्रो खुसीका लागि जेसुकै गर्नुपरे पनि पछि पर्दैन । तिमी पनि ऊसँग पक्कै खुसी हुनेछ्यौ । एकपटक उसलाई भेटेर एउटा मौका दिएर त हेर । निराश हुने छैनौ । एकदम बेस छ सुवास । ह्या ! अरू केके भनैँ भनैँ नि । मौका पाएको बेलामा कहाँ चुक्छु त म ? त्यो पनि तेरा लागि ! अब धेरै दिमाग नचला । बरु भोलि सरूसँग भेट्दा केके भन्छस् ? कसरी उसको विश्वास जित्छस् ? भोलि दिउँसो बाह्र बजे ऊ तँलाई कलेजअगाडिको क्याफेमा कुरिरहेकी हुन्छे है । ल त अहिलेलाई म गएँ । तँलाई त्यत्ति भन्न मात्र पर्खिरहेको थिए । बैंकमा काम छ मेरो ।

बाइ ।

****

राति ओछ्यानमा सुवासलाई भोलि सरूसँग भेट्ने पलको उत्साहले हो या छट्पटीले, निद्रा पर्दैन । मनमा धेरै कुराहरू खेल्न थाल्छन् ।

सुवास : (सोच्दै) छ्या, यो जिन्दगी त त्रास र आसमै अल्भिने रहेछ ! कहिले पाउने आस त कहिले गुमाउने त्रास । भोलि मैले सरूलाई विश्वास दिलाउन सकिनँ भने के होला मेरो हालत ? वर्षात्पछि तारमा भुन्डिएको एक थोपा पानीलाई सोधे हुन्छ - एक्लोपन कस्तो हुन्छ भनेर । कति एक्लोपनमा जीवन कटाउनु ? त्यसैले मैले जसरी पनि उसको मन जित्नैपर्छ । प्रेम प्रमाणले होइन, सम्मानले टिक्ने गर्छ । त्यसैले उसले यो कुरा नबुझ्दी रहिछ र प्रमाण मागी भने के दिने होला मैले प्रमाण ?

ह्या. यो के सोचिरहेको छु म ? जहाँ विश्वास हुन्छ, त्यहाँ प्रमाण चाहिँदैन नि ! के गीतामा श्रीकृष्ण भगवान्को हस्ताक्षर छ र ? तर फेरि विश्वासमा मात्र सम्बन्ध चल्छ भनेर कसरी सोच्नु ? यहाँ आफ्नो भाकल पूरा नभएपछि भगवान्समेत फेर्ने गरेका मानिसहरू नदेखेको हो र ? छ्या, जेसुकै होस्, कर्ममा लेखेको छ भने जे गरे पनि टर्दैन के रे ! यदि लेखिएकै छैन भने जस्तोसुकै प्रयास गरे पनि पाइँदैन । थोरै आशा जन्माउँछ बिहानीले, हत्यारा बन्छ दिन, अनि सजाय काट्छन् यी रातहरूले ।

'जे हुन्छ हेरौँला' भन्दै सुवास निदाउनतिर लाग्छ ।

****

रातभर राम्रोसँग सुत्न नसके पनि आज सरूलाई भेट्ने खुसीमा ऊ चिटिक्क परेर समयमै घरबाट निक्लिन्छ । फूलहरू पाउने पसलमा गएर एउटा रातो गुलाब किन्छ र आफ्नो ज्याकेटको भित्री खल्तीमा लुकाएर राख्छ ।

बाह्र बज्न लागिसकेको हुनाले ऊ हतारिँदै बतासिँदै त्यस क्याफेभित्र छिर्छ । 'सरू आउने बेला भयो, कहाँ बस्ने होला' भनेर क्याफेको टेबलहरूमा आँखा घुमाउन सुरु मात्र के गरेको थियो, कुनाको एउटा टेबलमा उसको आँखा पुगेर टक्क अडिन्छ ।

त्यस टेबलमा सरू पहिल्यै आएर बसिरहेकी देख्छ । सुन्दर सरूले निहुरिएर आफ्नो मोबाइल चलाइरहँदा उनको झरनाजस्तै कपाललाई मन्द हावाले हल्का उडाइरहेको दृश्य देख्नासाथ सुवास मन्त्रमुग्ध हुन्छ । उसलाई लाग्छ, ऊ त्यहीँ थचक्क बसेर घण्टौंसम्म सरूलाई त्यत्तिकै नियालिरहन सक्छ । तैपनि आफूलाई सम्हाल्दै बलजफ्ती आफ्ना पाइलाहरू बिस्तारै सरू भएतिर बढाउँछ । नजिकै पुगेर हिम्मत गरेर भन्छ -

सुवास : हेलो सरू, म लेट भएजस्तो छ नि !

सरूले सुवासको आवाज सुन्नासाथ आफ्नो मोबाइललाई टेबलमाथि राख्दै मुसुक्क मुस्कानका साथ भन्छे -

सरू : हेलो सुवास ! हैन, म अलि चाँडै नै आएकी थिएँ ।

सुवास : (आफ्नो ज्याकेटभित्रको फूल निकाल्दै) यो तिम्रा लागि ।

सरू : (आश्चर्य मान्दै) मलाई गुलाबको फूल मन पर्छ

भनेर कसरी थाहा पायौ ? सो स्विट अफ यु । धेरै धन्यवाद !

सुवास : धेरै बेर भयो आएको ?

सरू : होइन नि । केही बेर अगाडि मात्र हो ।

सुवास : अनि केही खानेकुरा अर्डर गऱ्यौ त ?

सरू : छैन । तिमी आएपछि सँगै गरौँला भनेर ।

सुवास : ए, ओके ।

उनीहरूले खाना अर्डर गर्छन् र सामान्य कुराहरूलाई नै त्यतिन्जेलसम्म निरन्तरता दिन्छन् । केही बेरपछि सरू एक्कासि गम्भीर मुद्रामा देखिन्छे र सुवासलाई सोध्छे -

सरू : सुवास, तिम्रा लागि प्रेम के हो ?

सुवास : (मुसुक्क हाँस्दै) तिम्रो याद ।

सरू : याद के हो ?

सुवास : तिम्रो प्रतिक्षा ।

सरू : (केही बेर टोलाएपछि) प्रतिक्षा के हो ?

सुवास : (मुस्कुराएर आफ्नो शिर हल्लाउँदै) मेरो जिन्दगी ।

सरू : (आँखा ठूलो पार्दै) जिन्दगी के हो त ?

सुवास : (मुसुक्क हाँसेर आँखा चिम्लिँदै) तिम्रो माया ।

केही बेरको सन्नाटा __सरू फेरि बोल्छे ।

सरू : तिमीलाई थाहा छ, हामी अरूको नजरमा त्यतिन्जेलसम्म राम्रो हुन्छौँ, जबसम्म हामीले उनीहरूले भनेको मान्छौँ ?

सुवास : (मुसुक्क हाँस्दै) थाहा छ ।

सरू : यदि, मैले तिमीले भनेको मानिनँ भने ?

सुवास : (गम्भीर हुँदै) सबैले चाहेको जस्तो कहाँ हुन्छ र जीवन ? धनीहरू व्रत रहरले बस्छन्, गरिबहरू बाध्यताले । ढिलो रिप्लाइ आयो भन्दै आजकाल कति सम्बन्धहरू तोडिन्छन्, हेर त ! पहिलापहिला उनीहरूको पर्खाइ र विश्वास कति बलियो थियो, चिठी लेखेर महिनौं कुरिरहन्थे, होइन र ?

सरू : सत्य हो ।

सुवास : अनि हाम्रा अग्रजहरूले हामीलाई सम्पन्न हुनु भनेको सबैभन्दा धेरै सम्पत्ति, ठूलो ओहदा र राम्रो सम्बन्ध हुनु हो भनेर सिकाएका छन् । तर तिनले हामीसँग झुटो बोले । खासमा सम्पन्न हुनु भनेको यी सबै कुराबाट सबैभन्दा धेरै स्वतन्त्र हुनु हो । आशाले निराशा ल्याउँछ र पूर्णरूपमा स्वतन्त्र भएर पूर्ण खुसीका साथ जीवन जिउन नसक्ने बनाउँछ भन्ने कुरासँग म जानकार छु । त्यसैले तिमीले जे गरे पनि म तिमीलाई परिवर्तन गर्नेतिर लाग्ने छैन । बरु तिमी वास्तविक रूपमा जस्तो छ्यौ, त्यसैलाई स्वीकार गरेर, त्यसैमा खुसी भएर जीवन बिताउने छु । मैले यस्तो भनौंला या तिमीले नमान्लाऊ भन्ने केही कुरा नै छैन मेरो मनमा । त्यसैले यहाँ राम्रो-नराम्रो होला भन्ने प्रश्न पनि उठ्दैन । तिमी सधैं मेरा लागि उस्तै रहनेछ्यौ, निर्धक्क हौ ।

सरू : (केही बेर सोचेपछि) आत्मीय सम्बन्ध अर्थात् 'सोलमेट' भनेको के हो ?

सुवास : त्यो व्यक्तिसँगको सम्बन्ध, जसको माया यति

शक्तिशाली होस् कि उसको मायाले संसार भुलेर हामीलाई शरीरदेखि पर आफ्नो आत्मासँग मिलन गराउने तागत राखोस् । जसले गर्दा त्यो व्यक्ति हामीलाई अत्यन्तै आत्मीय लागोस् ।

सरू : ठीक भन्यौ । (केही बेरको सोचपछि फेरि प्रश्न) मेरो अतीतसँग तिमीलाई केही सरोकार छ ? या त्यसले तिमीलाई केही फरक पार्छ ?

सुवास : बुबाआमाको सम्पत्ति पाइनँ भनेर मुद्दा हाल्ने धेरै सन्तानहरू देखियो, तर हामीलाई पालेनन् र वृद्धाश्रम लगेर छोडे भनेर उजुरी गर्ने बुबाआमा मैले आजसम्म भटेको छैन । त्यही हो साँचो माया । त्यसैले तिम्रो अतीतसँग मात्र नभई भौतिक शरीर; सामाजिक, आर्थिक या आध्यात्मिक अवस्था अर्थात् तिम्रो कुनै पनि कुराले मलाई फरक पार्दैन । किनभने मैले पनि तिमीलाई त्यस्तै चोखो माया गर्न थालिसकेँ ।

सरू : कसैको घर बिग्रियो भने त्यसको प्रमुख दोषी को हुन्छ ? त्यस घरको महिला कि पुरुष ?

सुवास : घरकी स्त्री समझदार हुँदिनन् भने घर टुट्छ, तर पुरुष समझदार हुँदैन भने त्यस घरकी स्त्री टुट्छे । जीवनमा सबैभन्दा ठूलो पीडा दिल टुटेर होइन, बरु भरोसा टुटेर हुन्छ सरू ! अब आफैँ सोच, दोष कसको होला ?

सरू : अरे वाह ! ध्रुवसत्य ।

एकछिनको फेरि सन्नाटा. अनि सरू भावुक हुँदै आफ्ना दुई नयनले जमिनलाई नियाल्दै सोध्छे -

सरू : मेरो एक जना एक्स ब्याइफ्रेण्डलाई म अति माया

गर्थे । उसले मलाई धोका दियो । उसको यादले मलाई अझै सताइरहेको छ । यसबारे तिमी के भन्छौ ?

सुवास : (निकै बेर सोचेपछि) उसले तिमीलाई धोका त दियो, तर मलाई विश्वास गर - ऊ तिम्रा लागि बनेकै थिएन । त्यही भएर तिम्रो कदर गरेन र तिमीलाई गुमायो । तिमी ऊभन्दा धेरै राम्रो मानिसको लायक छौ किनभने यस ब्रह्माण्डले हामीलाई हामीले चाहेका ती व्यक्तिहरू दिन्छ, जसले हामीलाई धोका देओस् । हाम्रो आँसु झारोस्, हामीलाई माया गरोस्, हाम्रो चित्त दुखाओस् अर्थात् ती सबै कार्यहरू गरेर हामीलाई उसले यति धेरै शक्तिशाली बनाउँछ कि जुन हुनकै लागि हाम्रो जन्म भएको छ । त्यसैले याद राख, तिमीले उसलाई भेट्नुअगाडि पनि त खुसीसाथ जिन्दगी बिताउँदै थियौ । त्यसैले आफ्नो खुसीको चाबी अर्काको हातमा नदेऊ । आफैँभित्र भएको खुसीको आरक्षण गर्न बन्द गर । स-साना कुराहरूमा खुसी हुन सिक ।

सुवासको जवाफहरूबाट सन्तुष्ट भएर सरूले एउटा अन्तिम प्रश्न गर्छे -

सरू : (एकदमै गम्भीर हुँदै) मैले पनि भोलिपर्सि तिमीलाई त्यसैगरी धोका दिएर छाडेर गएँ भने ?

सुवासले त्यस्तो अप्रत्यासित प्रश्नको आपेक्षा गरेको हुँदैन । त्यसैले आफूलाई सम्हाल्दै केही बेर सोचेर जवाफ दिन्छ -

सुवास : तिम्रो मुखबाट निस्केका शब्दहरू झुटो भए पनि त्यसबेला मेरो आखाँबाट झर्ने आँशु झुटा हुने छैनन् सरू ! कमाई थोरै होस् या धेरै, रोटीको आकार र नुनको मात्रा

लगभग सबैको घरमा बराबर हुन्छ । रोजेको र खोजेको सबै त कहाँ पाइन्छ जिन्दगीमा । जे-जस्तो छ, त्यसैलाई टालटुल पारेर चिटिक्क बनाउन सक्नुपर्छ नि । अनि कसले भन्छ, आजकाल साँचो माया गर्ने मुनामदन छैनन् भनेर ? यहाँ दैनिक हजारौँ मदनहरू आफ्ना मुना र आमालाई छाडेर विदेसिन्छन् । केवल छैनन् त ती देख्ने आँखाहरू र कथा लेख्ने महाकवि देवकोटा ।

त्यसैले सबै आफ्नो दृष्टिकोणमा भर पर्ने कुरा हो । मेरा लागि पाउनु मात्र माया होइन । आफूले माया गर्ने व्यक्तिको खुसीका लागि आफ्ना सम्पूर्ण कुरा गुमाएर पनि उसको खुसी हेरेर त्यही खुसीमा रमाउन सक्नुचाहिँ साँचो माया हो । के जरूरी छ र दुई जनामा प्रेम हुँदैमा उनीहरूले विवाह गर्नैपर्छ भन्ने । दुई जना सधैँ सँगै बस्नै पर्छ र ? दुई जानाको नाम जोडिदिनै पर्छ र ? प्रेम त आफैँमा एक पवित्र सम्बन्ध हो । त्यसलाई कुनै बन्धनको या नामको के जरूरी छ र ? होइन ?

सरु : (गम्भीर हुँदै) हो ।

सुवास : त्यसैले तिमी मसँग रिलेशनसिपमा बस्दा होस् या छुट्टिँदा, कुनै पनि बेला सुवासले मेरो बारेमा नराम्रो सोच्नै सक्तैन भनेर सुरक्षित महसुस गराउने छु । अरू कसैले नगरे पनि यसले मलाई सधैँ सपोर्ट गर्छ भन्ने विश्वास दिलाएर तिमीलाई हरपल स्वतन्त्र र सुरक्षित महसुस गराउन सकेँ भने त्यही साँचो माया हो । निर्धक्क होऊ, यदि कुनै दिन त्यस्तो पल आयो भने म तिम्रो त्यस निर्णयको सम्म्मान गर्नेछु । तिम्रो

खुसीमा नै आफ्नो खुसी खोजेर म पनि खुसी हुने प्रयास गर्नेछु । (भावुक हुँदै) प्रमिस, तिम्रो अगाडि चाहिँ रुन्नँ । रुनै परे पनि एकान्तमा बसेर रुनेछु ।

सुवासको कुरा सुनेर सरू अत्यन्तै भावुक हुन्छे । आफू बसेको ठाउँबाट एक्कासि जुरूक्क उठेर सुवासलाई अँगालो मार्दै भन्छे -

सरू : थ्याङ्क यु । एकदमै खुसी लाग्यो तिमीसँग भेटेर ।

# भाग ८

सबै जना हाँसिराखेकै बेला साहिलले आभासतिर फर्किंदै भन्छ -

साहिल : ओइ, आभास ! पहिला तँ अर्कै थिइस्, पछि एक्कासि तँभित्र यस्तो ज्ञान र परिवर्तन कहाँबाट आयो हँ ? यही हो मेरो 'माइ काइण्ड अफ गर्ल' भन्दै तैँले एक जनासँग विवाह नै गरेको थिइस् । पछि फेरि डिभोर्स पनि गरिस् । यसबारे हामी कसैलाई केही थाहा छैन । ल आज भन् त, के भएको थियो ?

आभास : (हाँस्दै) लौ ! यसले फेरि कहाँको कुरा निकालेको के ! हा.हा..हा... !

सरू र सुवासले पनि एकै स्वरमा भन्छन्, 'हो हो, आज भन्नैपर्छ । ल सुनम् त, के भएको थियो ?

आभास : (हाँस्दै) हा..हा..हा.. ! ल ल सुन ।

मेरो जिन्दगीमा कुनै कुराको प्याटर्न बनेको या कुनै आदत बनेको देख्नेबित्तिकै म त्यसका बारेमा एकदमै राम्रोसँग सोच्छु । कुन कुरालाई कहाँ गएर रोक्ने आफूलाई ठ्याक्कै

थाहा हुनु नै बुद्धिमत्ता हो ।

म सानैबाट चीलजस्तो स्वतन्त्र राजा बन्न चाहन्थेँ । जसले खुलेर यो संसाररूपी आकाशमा बिना कुनै बन्धन, पूर्ण स्वतन्त्रताका साथ, आफ्नो सुन्दर जीवनको पूर्ण आनन्द लिन सकोस् । यस्तो-उस्तो भन्ने कुनै पनि अदृश्य बन्धनहरू नै नहोस् । आफू खुसी हुने सबै कुरा गरौँ भन्ने म सोच्थेँ । त्यही भएर संसारको बेवास्ता गर्दै मैले आफ्नो इच्छाअनुरुपको जीवन जिउन सुरु गरेँ ।

सधैँ एकैखाले रोबोटिक जीवन बिताइरहेकाहरूले जतिसुकै ठूला कुरा गरे पनि उनीहरूसँग आफूपछिको पिँढीलाई सुनाउन लायक रोमान्चित र उत्साहित गर्ने केही कुराहरू नै हुन्न । तिनीहरू सबैको प्रायः एउटै कुरा हुने गर्छ । पढेँ या यस्तो ठूलो काम गरेँ, यता-उता गएँ, यस्तो-उस्तोसँग भेटेँ, टन्न कमाएँ, तिमीहरूलाई दुःख गरेर भए पनि हुर्काएँ आदि । निष्कर्षमा भन्नुपर्दा आधा जिन्दगी सर्टिफिकेट जम्मा गर्न र बाँकी आधा जिन्दगी त्यसैको फोटोकपी गर्दै अर्को कागजको खोस्टा पैसा जम्मा गर्दै बिताउँछन् । आफ्नो जीवनको अन्त्यतिर आउँदा उनीहरूलाई आजसम्म जे-जति गरेँ, त्यो त सबै अरूका लागि पो गरेको रहेछु, तर मैले आफ्ना लागि चाहिँ के गरेँ त भन्ने महसुस हुन्छ । यस्ता प्रश्नहरूको कुनै उत्तर भेट्दैनन् । त्यही पनि लाजले गर्दा त्यो कुरा मनमनै स्वीकारिसक्दा पनि अरूलाई सुनाउँदा चाहिँ अझै घमण्ड गर्छन् । 'गरेँ नि आफ्ना लागि, यो सबै कमाएको र तिमीहरूलाई यस्तो बनाएको सबै मेरै लागि त हो' भन्दै झारो टार्ने, तर्किने

काम गर्छन् ।

खासमा सबैले कहिले अरूलाई चित्त बुझाउने र खुसी पार्ने ठेक्का लिएर ठेकदार बने । कहिले आफ्ना सपनाहरूको तिलान्जली दिए । कहिले अरूलाई कुर्दै बसेर गोठालो बने । कहिले अरूका लागि काम गरिदिएर नोकर बने । कहिले जिन्दगीभर अरूलाई जज गर्ने जज साहेब मात्र बनेरै यस्तो अमूल्य जीवन खेर फालिरहे । सबै जना भेडाजस्तै म्याँम्याँ गरेर हूल बनाउँदै एउटै दौडमा लागेका देखेर म पहिलेदेखि यी भेडाहरूको जस्तो गर्नहुँदैन भन्नेमा निश्चिन्त थिएँ । बरु एक्लै चीलजसरी जिन्दगी बिताउँछु, तर आफ्ना इच्छाहरू र खुसीको आहुति दिन्नँ । आफ्नो यो सुन्दर जीवनको पूरा आनन्द लिन्छु । अनि चीलजस्तो बन्न खोज्ने म कहाँ कुखुराको चल्लाहरूसँग जिन्दगी बिताउन सक्छु त ? त्यही भयो मेरो त्यस सम्बन्धमा पनि ।

सरू : बुझिनँ, के भयो ?

आभास : (भावुक हुँदै) तिमीहरूलाई थाहा छ, मोमबत्तीलाई पनि आफ्नो अन्तिम समयमा थाहा हुन्छ, जसलाई उसले छातीभित्र लुकाएर राखेको थियो त्यही धागोले नै उसलाई सिध्याएको हुन्छ । एक दिन मलाई उसले मसँग सम्पत्तिका लागि विवाह गरेकी रहिछ भनेर थाहा भयो । उसले मेरो दुःखको समयमा मेरा खुट्टाहरू लड्खडाउँदा 'यो लड्यो, अब उठ्न सक्तैन, त्यसैले योसँग बस्नु अब फाइदा छैन' भन्ने सम्झेर हाम्रो सम्बन्धलाई बजारमा र अदालतको गेटमा पुऱ्याई । उसलाई अदालतमा पहिलोपटक देख्दा मलाई लाग्यो, 'किन्न

मिल्थ्यो भने तिमीलाई आफ्नो जिन्दगी बेचेर भए पनि किन्थें । तर अफसोस मानिसहरू किमतले होइन, बरु किस्मतले मिल्दा रहेछन् । धेरै बलियो सम्बन्ध थियो मेरो, तर तिमीजस्तो कमजोर मानिससँग । त्यही भएर दुनियाँसँग लडेर सात जन्म साथ दिन्छु भनी अग्निको फेरा लिएर कसम खाएका हामी आज अदालतको ढोकासम्म आइपुगेका छौं । सम्बन्धमा घाटा-नाफा हेरेर तिमी व्यापारी भयौ । यति-उति भन्दै सँगै बिताएका पलहरूको मूल्य मिलाउन मोलतोल गर्दैछौ । सम्बन्धलाई भावनाले सिलाएको भए पो टिक्थ्यो त ! स्वार्थले सिलाएपछि त यसैगरी उध्रिएर बजारभाउमा बिक्छ, अनि अदालतको ढोकामा पुग्छ ।' मैले केही कुराको आशा राख्नै छोडिसकें । जसले जे भने पनि या गरे पनि 'ठीकै छ' भनिदिन्छु । आशा नभएपछि निराश पनि नभइने रहेछ । छोरीको एकदमै याद आउँछ । अरूले आफ्ना बच्चाहरूसँग खेलेको, घुमाएको, सँगै रमाएको देख्दा 'तर त्यो पनि ठीकै छ' भन्ने लाग्छ । एउटै पेटबाट आएका भाइबहिनी बुबाको मृत्युपछि परिवर्तन भएर एक्कासि पराइ बन्दा पनि ठीकै छ । समाजले खेदो खनेर मेरो भूपू श्रीमतीकै पक्ष लिंदा पनि ठीकै छ । जसले जे गर्दा पनि ठीकै छ ।

जुन मेरो थियो, त्यो मेरो हुन पाएन । आँखाभरि आँसु थियो, तर रुन पाइनँ । त्यसबेला उसले भनेकी थिई - 'सपनीमा भेटौंला ।' तर दुर्भाग्य ! त्यो रात म खुसीले सुत्नै पाइनँ । खबर पाएँ भन्दै थिई रे उसले । अब त म उसको सपनामा मात्र आउँछु भनेर भन्दै थिई रे ! काश, कसैले यो खबर पनि उसकोमा पुऱ्याइदियोस् । उसले वाचा गरोस्, ऊ

सधैं सपनीमा आउँछे भनेर। म जिन्दगीभरका लागि सुत्न तयार छु। उसलाई भन्न मन लागिरहेको थियो, 'झरी र तिम्रा यादहरू उस्तैउस्तै रहेछन्। दुवै थाहै नदिई आउने।' बस्, फरक यति मात्र थियो कि झरीले जमिन भिजाएर जान्छ, तिम्रो यादले मेरो परेली।

सधैंभरि बलिरहने दियोजस्तो बनाउन मन थियो मलाई हाम्रो सम्बन्ध। तर अफसोस, अगरबत्ती परेछ क्यारे! बास्ना त खुब थियो, धेरै बेर भने टिकेन। त्यसैले त युद्ध र प्रेममा यति मात्र फरक छ भनिन्छ - युद्धमा कि जितिन्छ कि हारिन्छ, तर प्रेममा न जितिन्छ न हारिन्छ। बस्, जिउँदै मरिन्छ।

अदालतमा छुट्टिने बेलामा उसले विभिन्न बहाना बनाइरहेकी थिई। मलाई भने लागिरहेको थियो, छोडेर जान मन छ भने जाँदा हुन्छ, प्रिय! बहाना बनाउनुपर्दैन। सासले पनि त जाने बेलामा शरीरलाई सोधेर जाँदैन नि। त्यसपछि रातभर बसेर मैले सोचें, 'आखिर मेरो कुनचाहिँ बानी उसलाई मन परेन?' तर सोचिनँ, 'उसलाई अरू कसैको बानी पो मन पर्न थालेको रहेछ।'

रोएर नि भएन, कराएर नि भएन, जबर्जस्ती आफ्नो गराएर नि भएन। हातका रेखाहरू नै नमिलेपछि बलजफ्ती मन पराएर नि भएन। त्यसैले मैले उसलाई भनिदिएँ, 'म त तिम्रो खास हुन सकिनँ। तर जो तिम्रो खास छ, उसलाई तिमी कहिल्यै नगुमाउनू ल! माया भन्ने चिज यस्तै रहेछ। जति पीडा भए पनि ओठमा मुस्कान छर्नुपर्ने। मैले सुनेको

थिएँ, 'शरीर मरे पनि आत्मा जीवित हुन्छ ।' मेरो जीवनमा त्यसको ठीक विपरीत भयो । मेरो शरीर जीवित त छ अहिले, तर आत्मा मरिसक्यो तिमी र छोरीबिना ।'

ऊ पनि मुख अँध्यारो पार्दै 'समय नै त्यस्तो थियो' भन्न थाली । मैले पनि भनिदिएँ, 'हाम्रो सम्बन्धलाई मायाले बाँध्न खोजें मैले, तर आफैं दोषी भएँ । यो सम्बन्ध यति कमजोर बनिदियो कि सम्बन्धलाई सम्हालेर राख्न असफल भएँ । स्वार्थका कारण बदलिँदो रहेछ सबै कुरा । समय त केवल बहाना हो ।

'खानेकुराको स्वाद पो खानेबित्तिकै थाहा पाउन सकिन्छ, जिन्दगीको स्वाद त जति भोग्यो त्यति थाहा हुँदो रहेछ । जिन्दगी दुःख-सुखमा आफैं निकै रोमाञ्चित हुने रहेछ । त्यसैले म ठीक छु । तिम्रो निर्णयलाई सम्मानसाथ स्वीकार्छु । तिमीलाई जे ठीक लाग्छ त्यो गर । पैसाले जवानी र प्रेम किनबेच हुने तिम्रो दुनियाँमा अब मेरो साँचो प्रेमको कौडीको जति पनि मूल्य रहेनछ, त्यो थाहा पाइसकें ।

'तिम्रो त्यो महँगो मायाको बजारमा म सस्तो सामान भई बिक्री हुन पुगेछु । मेरो मूल्य कहिल्यै बढाउनै सकेनछु । जति पुरानो हुँदै गएँ, त्यति मूल्य घट्दै गएछ र अन्त्यमा पूरै बजारमा पुऱ्याएर तिमीले मलाई दिएको मायाको मोलतोल गर्न सुरु गऱ्यौ यसरी अदालतमा ।

'आज मैले तिमीलाई र मेरो समाजलाई देखेर थाहा पाइसकें, चोट दिने भनेकै आफन्तले हुन् । पराइले त भुक्किएर ठोक्किँदा पनि माफी माग्छन् । अब त्यस्ता चोट दिन हरपल

तयार भएर बसेकाहरूलाई आफ्नो सम्झेर भ्रममा के बाँचिरहने ?

'रुखहरूले नै सिकाउने गर्छन् - जति छरिन्छौ, त्यति नै निखारिन्छौ । त्यही निखारिन म पनि छरिएको मात्र थिएँ । तर आजकालको सम्बन्ध रोटीजस्तै भइसकेको रहेछ । अलिकति ताप बढी भयो कि जलेर खरानी भइदिने । त्यस्तै भयो हाम्रो सम्बन्ध पनि । जलेर खरानी भयो थोरै ताप बढी हुनासाथ ।

'एकैछिन भए पनि मीठो थियो निद्रामा देखेको सपना अनि तिम्रो साथ । याद राख, तिमी र छोरीप्रतिको मेरो माया ऐनाजस्तै हो । चाहे जति टुक्रा पार, हरेक टुक्रामा तिमीहरू मात्र देखिन्छौ । नबुझेरै प्रेम हुने रहेछ, बुझेपछि त ब्रेकअप या हाम्रोजस्तै डिभोर्स हुने रहेछ । नबोलेर सम्बन्ध चिस्याउनुभन्दा धेरै बोलेर यसरी सम्बन्ध टुटाउनु नै राम्रो हो ।

'याद राख । यदि छुट्टिएर खुसी मिल्ने भए रुखबाट खसेका पातहरू कहिल्यै ओइलाउने थिएनन् । तिमीले यो कुरा बुझ्नै खोजिनौ । त्यसैले जसले जति साथ दिएका थिए, उनीहरूको साथलाई धन्यवाद । ज-जसले बीचमा छोडिदिए, ती हातहरूलाई पनि धन्यवाद ।' यति भनेर मैले हात जोड्दै ऊबाट सदाका लागि बिदा लिएँ ।

चित्र लाइक गर्दै सुरु भएको हाम्रो सम्बन्ध चरित्रमा कमेन्ट गर्दै सकियो । जुन मानिसचाहिँ मलाई सबैभन्दा धेरै चाहिन्थ्यो, अन्तमा उसैले मलाई सिकाई, मलाई कोही पनि चाहिँदैन ।

(केही बेरको सन्नाटा.)

आभासको कुरा सुनेर सबैका आँखा रसाइरहेका थिए। त्यो हँसिलो अनुहारपछाडिको पीडा सबैले महसुस गरिरहेका थिए।

आभासको कुरा सुनेर सरूको आँखाभरि आँसु हुन्छ। साहिल र सुवासको पनि मुख अँध्यारो हुन्छ।

साहिल : (आफूलाई सम्हाल्दै) यदि दाइजो माग्नु अपराध हो भने सम्पत्ति हेरेर छोरी दिनु पनि चेलिबेटी बेचबिखन नै हो नि, होइन र ? त्यसैले छाड् आभास, अब त्यस्ताहरूलाई सम्झेर पनि काम छैन। मैले देख्ने गरेको छु, प्राय: निर्दोषहरूसित प्रमाण एकदमै कम हुन्छ। सम्बन्धमा बसेपछि जस्तोसुकै दु:ख-सुख परोस् या जेसुकै होस्, त्यस्तो कुनै पनि बहानामा छोड्ने, तँलाई एक्लै पार्नेहरूले कहिल्यै तँलाई प्रेम नै गरेका हुँदैनन्। तँ सिर्फ भ्रममा रहेछस्। त्यो हट्यो भनेर भगवान्लाई धन्यवाद दे, किनभने यही कुरा बूढेसकालमा थाहा पाएको भए के हुन्थ्यो तेरो हालत एकपटक कल्पना गर् न। त्यही भएर त 'जे हुन्छ, भनै राम्रो हुनका लागि हुन्छ' भनिन्छ नि। त्यसैले म भन्ने गर्छु :

प्रेम त्यस्तो नहोस्, रूघाखोकीजस्तो
दुई-चार दिन लाग्ने, अनि छाड्ने।
प्रेम त त्यस्तो होस्, एचआइ भी/एड्सजस्तो
लागेपछि जीवनभर नछोड्ने

हा..हा..हा..

सबैको हाँसो गुन्जिन्छ। साहिल अझै बोलिरहन्छ।

साहिल : त्यो चुरोटको बट्टाबाहिर 'धुम्रपान स्वास्थ्यका लागि हानिकारक छ' भनेर लेखेको देखेका छौ नि तिमीहरूले ? मानिसहरूले त्यो देख्दादेख्दै, यसले आफूलाई सिध्याउँछ भनेर थाहा हुँदाहुँदै पनि त्यसलाई चटक्क छोड्न सक्तैनन् नि । त्योबिना बस्नै सक्तैनन् नि । अब बुझ्यौ तिमीहरूले 'साँचो प्रेम' कस्तो हुँदो रहेछ ? अनि हामी पुरुषहरू बिहेअघि पनि बाघ हुन्छौँ र बिहेपछि पनि बाघ नै रहन्छौँ । फरक यति मात्र हो कि बिहेपछि बाघमाथि दुर्गामाता बसेकी हुन्छिन् ।

"हैन के भन्दैछ यो गफाडी... !" (रजनीको प्रवेश)

रजनी : ओहो, मेरा प्याराहरू ! सबैभन्दा लेट म भएछु । आइ मिस्ड यु गाइज ।

# भाग ९

"ओइ, सुवास !" क्लासको ढोकाबाटै आभास चिच्याउँछ । ऊ सुवास बसेकै बेन्चमा सुवासकै साइडमा थचक्क बस्छ र सुवासको कानमा सुवासलाई जिस्क्याउने पाराले मस्किँदै सोध्छ -

आभास : के जादु गरिस हँ तैंले सरूलाई ?

सुवास : (मुसुक्क हाँस्दै) किन ? के भयो र ?

आभास : (हाँस्दै) तँसँग भेटेर आएबाट त ओहो खुब तेरो मात्र तारिफ निक्लिरहेको छ त उसको मुखबाट ! के टुनामुना गरिस् हँ ?

सुवास : (लजाउँदै) हो र ? ऊ भन्छस् ! अबदेखि भाउजू भन् भाउजू । गधा !

आभास : (फिल्मी पारामा) हाय ! मै मरजावा मै तो लुट जावा.. तुम ऐसे बाते किया ना करो (हिन्दी गाना गाउँदै जिस्काउँछ )

सुवास : (लाजले गाला रातो पार्दै) उता जा । ..हा..हा..हा.. धेरै नजिस्का मोरा !

आभास : (झनै जिस्काउँदै) ओहो... मेरो चुनुमुनुलाई लाज लाग्यो ? लभ गर्दाचाँहि लागेन ? आँखा चिम्म गरेर या हेल्मेट लगाएर गरेको थिइस् हो लभचाहिँ ? हा..हा..हा... !

सुवास : (जिस्किँदै) हो नि ! कसरी ठ्याक्कै थाहा पाएको ? आँखामा पट्टी बाँधेर लुकामारी खेल्दै थियौं, लभ पो परिरा... । हा..हा..हा... !

आभास : उफ् ! अब बोलेर कहाँ सकिन्छ ठूलो मान्छेसँग ? होइन त लभ बहादुर ? हा..हा..हा... !

सुवास : हो त ! हा..हा..हा.. सरूको महाराज लभ बहादुर म । अनि ठूलो मान्छेलाई तँ भन्छस् ? तपाईं भन्, गधा ! हा..हा..हा.. !

दुवै जना एकैपटक खित्का छोडेर सँगै हाँस्छन् ।

आभास : (अचानक गम्भीर हुँदै) एउटा कुराचाहिँ सधैं याद गरेस् ।

सुवास : (उत्सुक हुँदै) के कुरा ?

आभास : प्रेममा परेका हरेक केटीको चाहना हुन्छ, आफ्नो शरीरमा स्पर्श गर्न पुगेका ती हातहरू उनीहरूको सिउँदोसम्म नि पुगोस् ।

सुवास : हुन्छ । म यो कुरा मनन् गर्छु ।

आभास : अनि अर्को एउटा कुरा...

सुवास : के कुरा ?

आभास : कुरा तीतो छ, तर सत्य यही हो । सारा

दुनियाँलाई 'ब्लर' गरेर जसमाथि हामीले 'फोकस' गर्छौं नि, उसैले पछि बिना कुनै ठूलो कारण हामीलाई 'क्रप' गरिदिने रहेछ । मैले धेरैको देखेको छु । आफैँले पनि भोगेको छु । त्यसैले आफ्नो लिमिट नभुलेस् ।

सुवास : हुन्छ, म सतर्क रहनेछु ।

आभास : अस्ति आफ्नो दुई वर्षपछिको प्रेम सम्बन्ध टुटेपछि सेक्सन बीको विक्रमले के भन्दै थियो थाहा छ ?

सुवास : के भन्यो र ?

आभास : उसले दु:खी हुँदै भनेको थियो, 'ढोकामा साइकल लिएर आएको कबाडीलाई सोधेँ - मेरा यादहरू थुप्रिएका छन् लैजान्छौ ?' खिस्स हाँसेर कबाडीले भनेछ, 'केही मूल्य पर्ने सामान दिनुस् न दाइ ! हा..हा..हा.. ! (दुवै जना सँगै हाँस्छन् ।)

****

दुई दिनपहिला उनीहरूको विवाहको दोस्रो म्यारिज एनिभर्सरी थियो । सुवासले त्यो भुल्छ । त्यसमाथि घर पनि लेट आउँछ । त्यसपछि त के चाहियो र ? दुवै जनाले एकदमै झगडा गरे त्यो दिन । आफ्नो रिस कम भएपछि सुवासले आफ्नी श्रीमती सरूलाई फकाउने कोसिस नगरेको पनि होइन । तर मेडम त मेडम नै हुन्छन् नि ! मन लाग्यो, माफ गरिदियो । मन लागेन, नगरिदिए भयो ।

उनीहरूको विवाहको पहिलो साल त ठीकै थियो । त्यसपछि

आजको दिनसम्म आइपुग्दा भने त्यो सम्बन्ध विषालु भइसकेको थियो । न सुवास पहिलाको सुवास थियो, न सरू नै । आफ्नो सम्बन्धमा त्यस्तो अमिलोपन आइसक्दा पनि विवाहमा भएको त्यत्रो खर्च, समाजका अगाडि गरिएको त्यो तामझाम र आफ्नो परिवारको इज्जत जाने डरले मन नलागीनलागी आफ्नो अमूल्य जीवनसँग सम्झौता गरेर दुवै जना सँगै बसिरहेका मात्र थिए । दुवैमा डिभोर्स गर्ने हिम्मत नभएर ती खोक्रा मान्यताहरूको अगाडि लाचार थिए । त्यस सम्बन्धलाई र आफ्नो जीवनलाई झनै विषालु बनाउने ठूलो गल्ती गरिरहेका थिए । अरूलाई इम्प्रेस गर्ने चक्करमा आफूहरू चाहिँ जीवनभर डिप्रेस भएर बाँच्नुलाई नै जीवन सम्झिरहेका थिए ।

त्यस सम्बन्धमा अब मायाको ठाउँ घोचपेच र रोमान्सको ठाउँ झगडाले लिइसकेको थियो । एक–अर्काको सम्मानको बीचमा उनीहरूको स्वाभिमान आउन थालिसकेको थियो ।

"आखिर कसैले आफ्नो म्यारिज एनिभर्सरी कसरी भुल्न सक्छ ? सुवासले मलाई पहिलाको जसरी माया नै गर्दैन ।" सोफामा बसिरहेकी सरूको मनमा विचार आउँछ । ऊ सुवाससँग यति धेरै रिसाएकी थिई कि विगत दुई दिनदेखि बोलेकी पनि थिइन ।

ढोकाको घण्टी बज्यो । उसले गएर घरको मुख्य ढोका खोल्छे । अगाडि वर्षात्ले निथ्रुक्क भिजेको सुवास हातमा राता गुलाबहरूको गुच्छा र मुहारमा मुस्कान लिएर उभिइरहेको थियो ।

सरूले फूलको गुच्छा सुवासको हातबाट लिन्छे र घरबाहिर

हिलोमा फ्याँकिदिन्छे । अनि फेरि सुवाससँग झगडा गर्न सुरु गर्छे । "तिमीलाई के लाग्छ, सुवास ! यसरी मलाई फूल दिँदैमा म सबै कुरा बिर्सन्छु ? यदि साँच्चिकै माया गर्छौ भने मात्र देखाऊ, तर यस्तो झुटो मायाका नाटकहरू देखाउने नगर है ! मैले भन्देको छु, मलाई मनपर्दैन ।"

सुवासले केही भन्नुअगाडि नै भित्र कोठामा चार्जमा राखेको सरूको मोबाइलमा जोडजोडले घण्टी बज्न थाल्छ । त्यो सुनेर सरू ठस्किँदै, आफ्ना खुट्टाहरू जोडले भुईंमा बजार्दै र सुवासलाई रिस देखाउँदै भित्र गएर फोन उठाउन मोबाइल आफ्नो हातमा लिन्छे । कसको फोन रहेछ भनेर नाम हेर्दा चकित पर्छे, त्यो फोन सुवासकै थियो ।

उसले फोन उठाउँछे । अर्को तर्फबाट अर्कै अपरिचित पुरुषको आवाज आउँछ ।

"हेलो, म बानेश्वर चौकीबाट हवल्दार थापा बोल्दैछु । के यो सुवासजीको घर हो ?"

सरू : (आफूलाई सम्हाल्दै) हजुर हो । किन ?

हवल्दार थापा : आफूलाई सम्हाल्नुस् । यो भनिरहँदा मलाई दुःख लागिरहेको छ ।

सरू : (आश्चर्य मानेर उसको कुरा बीचमै काट्दै) के कुरा ?

हवल्दार थापा : अघि भएको एउटा सडक दुर्घटनामा एक जना पुरुषको मृत्यु भएको छ । हामीले उहाँको खल्तीबाट एउटा पर्स र  मोबाइल फेला पार्‍यौं । जसमा तपाईंको

मोबाइल नम्बर घरको नामले सेभ गरिएको छ। त्यसैले हामीलाई लास सनाखत गराउनुपर्‍यो। के तपाईं अहिले नै सिभिल हस्पिटल आउन सक्नुहुन्छ ?'

त्यो सुन्नेबित्तिकै सरूको मनमा चिसो पस्छ। तैपनि अचम्म मान्दै भन्छे -

सरू : मेरो श्रीमान् त अहिले मसँगै हुनुहुन्छ। यहीं घरमै।

हवल्दार थापा : माफ पाऊँ हजुर। यो घटना घटेकै दुई घण्टा भइसक्यो। बानेश्वरमा बाटो काट्दै गर्दा उहाँको दुर्घटना भएको हो।

सरूको आँखाअगाडि अन्धकार छायो। हातखुट्टा लगलग काम्न थाले। ओठ सुकेर प्याकप्याक भयो।

ऊ सोच्न थाल्छे, "मैले पहिला कतै सुनेकी थिएँ, आत्माहरू यो दुनियाँ छोड्नुअगाडि आफ्नो प्रियजनलाई भेट्न आउँछन्। कतै त्यही त होइन ?"

उसका आँखाबाट बलिन्द्रधारा आँसु बग्न थाल्यो। ऊ कुद्दै अघिको मुख्य ढोका भएको हलमा आउँछे। सुवास त्यहाँ थिएन। त्यो पुलिसले सत्य नै भनेको रहेछ। अब सरूलाई अत्यन्तै पछुतो हुन थाल्यो। सुवास आफू मरेपछि पनि अन्तिमपटक सरूलाई फकाउन हातमा फूल लिएर मनाउन आएको थियो। तर रिसमा सरूले नराम्रो व्यवहार गर्छे। ऊ सोच्न थाल्छे, "कति खत्तम छु म !"

ऊ रुँदै भुइँमा बस्छे। उसले मौका खेर फालिसकेकी

थिई, त्यो पनि सधैंका लागि ।

सरूलाई पुराना घटनाहरू याद आउन थाल्छन् । विवाहअगाडिको रोमान्टिक लभ स्टोरी, सुवासले उसलाई सबैका अगाडि सिनेमा हलमा घुँडा टेकेर विवाहका लागि गरेको प्रपोज । आधा रातमा सरूले भोक लाग्यो भन्नेबित्तिकै झर्को नमानी सुवासले चाउचाउ बनाएको । नजानीनजानी भए पनि उसलाई खुसी पार्न सुवासले आफ्नो बेसुरो आवाजमा गाएको 'एउटा मान्छेको मायाले कति, फरक पर्दछ जिन्दगीमा..' भन्ने स्व. नारायण गोपालको गीत । 'सुवास नाच न' भन्दा एकैछिन पनि नसोची नजानीनजानी पनि सुवासले नाचेको । सबै कुराहरू सरूको आँखाअगाडि चलचित्रजस्तै आफैं घुम्न थाल्छन् ।

सरू आफ्ना आँखा बन्द गरेर भगवान्सँग प्रार्थना गर्न थाल्छे, "हे भगवान् ! सिर्फ एकपटक मलाई मेरो सुवाससँग फेरि भेटाइदिनुहोस्, ताकि म उसलाई भन्न सकूँ - म उसलाई कति धेरै माया गर्छु !" ऊ बन्द आँखाबाट आँसुको खोला बगाउँछे ।

अचानक बाथरूमभित्रबाट कसैको आवाज सुनिन्छ । बिस्तारै ढोका खुल्छ । त्यहाँबाट बाहिर निक्लँदै सुवासले भन्छ, "सरू, मैले त भन्नै बिर्सेछु ! आज दिउँसो बानेश्वरमा मेरो पर्स र मोबाइल राखेको ज्याकेट नै चोरी भयो नि !"

सरू मूर्तिजस्तै भएर सुवासलाई एकछिन टुलुटुलु हेर्छे । त्यसपछि आफूलाई सम्हाल्दै कुदेर गएर सुवासलाई 'झ्वाम्म' अँगालो हाल्छे र आँखा चिम्म गरेर निकै बेर त्यसरी नै

बसिराख्छे ।

एकछिनमा सरूको झस्याङ्ग निद्रा खुल्छ । पसिनाले लपक्क भिजेको आफ्नो शरीरतिर हेर्दै छेउको टेबलमाथि गिलासमा राखेको पानी पिउँदै सोच्छे, "ओहो ! कस्तो डरलाग्दो सपना देखेको मैले !"

मेरो सपना डरलाग्दो भए पनि एकदमै अर्थपूर्ण थियो । हो, कहिलेकाहीँ हामीलाई 'एक पल'को सही मूल्य तबसम्म थाहा हुन्न, जबसम्म त्यो पल बित्दैन । प्रायःजसो हामी आफ्नाहरूसँग त्यस्तै व्यवहार गरिरहेको हुन्छौँ, जस्तो हामी अपरिचित मानिसहरूसँग समेत गर्दैनौ । हो नि ! यदि हामीले त्यस मानिससँग अन्तिमपटक भेट्दै छौँ भनेर थाहा पायौँ भने के हामी ऊसँग नराम्रो व्यवहार गर्छौँ त ? जीवनले दोस्रो मौका दिँदैन । त्यसैले त्यो एक मौकालाई हातबाट फुस्किन दिनुहुन्न, किनभने हामी कसैलाई नि थाहा हुँदैन, कसको अन्तिम पल कहिले आउँछ ? न अरूको, न आफ्नो नै । त्यसैले आफ्ना प्रियजनहरूसँग यसरी भेटौँ र व्यवहार गरौँ कि उनीहरूसँग हामी अन्तिमपटक भेट्दैछौ ।

हो, यही कुरा नै हो, मेरो त्यस सपनाले मलाई सिकाउन खोजेको । आजबाट म परिवार र सुवासलाई धेरै माया गर्नेछु । धेरै महत्त्व दिनेछु । कहिल्यै झगडा नगरी खुसीसाथ जीवन बिताउने छु ।

सरूले त्यसैबेला हतारहतार आफ्नो मोबाइल हातमा लिएर सुवासलाई म्यासेज लेख्छे, "आई लभ यु" ।

# भाग १०

आफ्नो पेट समाउँदै साहिलले मुख बिगार्छ र ट्वाइलेटबाट आएर सुवासको छेउमा थचक्क बस्छ । अनि भन्छ -

सहिल : कस्तो पेट कटक्क काटेर दिसा आउन लाग्यो भन्ने लागेर ट्वाइलेट गएको त, हेर् न सुवास ! पाद मात्र भ्वाँक्क निक्लिरा. । मेरो चाकले पनि अप्रिलफुल मनाइदिरा. हा.हा.हा. !

सुवास : (हाँस्दै) हा.हा.हा. फोहोरी !

साहिल : (मुख बङ्ग्याउँदै) केको फोहोरी हो फेरि ? लौ, प्राकृतिक कुरा हो नि त्यो । यो संसारमा दिसा-पिसाब नगर्ने कोही होला र ? अनि तेरो नाम सुवास भएर के भो त ? तैंले पादिस् भने पनि गनाउँछ नि !

साहिलको कुरा सुनेर सबै जना मरीमरी हाँस्छन् । हाँस्दाहाँस्दै आफ्नो मुख रातोपिरो पार्दै आभासले भन्छ -

आभास : ओइ, सुवास ! छाड्दे के छाड् । तैंले सक्दैनस् त्यसलाई बोलेर हा.हा.हा.. !

रजनी : (हाँस्दै) साहिल, तँ अझै उस्तै छस् है ?

साहिल : (मुसुक्क हाँस्दै) समय आएपछि बुझ्ने छौ मेरो महत्त्व । थाहा होला नि, सित्तैमा पाउने अक्सिजन अस्पतालमा पुगेपछि कति महँगो पर्छ ? मौसम हो र म परिवर्तन भइराख्न ? मान्छे भएपछि त सधैं एकनासे, उस्तै भइराख्नुपर्‍यो नि ।

रजनी : तर अरू त हुन्छन् त...

आभास रजनीलाई बीचमै रोक्दै भन्छ -

आभास : पख पख... केही बेर पख । अहिले फेरि तिमीहरू बोल्न सुरु गर्‍यौ भने रात पर्छ । सुवास, साहिल ! हिँड । राति 'बार्बिक्यू' गर्ने र नाच्दै, मासु पोल्दै रमाइलो गर्ने भनेको होइन ? जाम्, मिलाउन थालौं । महिला पार्टी एकछिन गफसफ गर्दै गर, हामी एकछिन व्यस्त भयौं अब ।

तीन जना पुरुषटोली त्यहाँबाट जान्छन् । रजनी सरूतिर फर्किंदै कुरा गर्न सुरु गर्छे ।

रजनी : सरू ! अघि म आउने बेलामा सबैको मुख अँध्यारो देखेकी थिएँ त ! के भन्दै थिए हाम्रा तोरीलाउरेहरू ?

सरू : के हुनु ? त्यही त हो विगतका कुराहरूको याद । यस संसारका सबै जना आफू ठीक छु भन्ने प्रमाणित गर्न त लागेका छन् नि । अनि त्यही दौडमा हामी पनि त लागेका छौं । त्यसैले त्यही केटीको कुरा, भूपू मायालुहरूका कुरा, यस्तो गरी, उस्तो गरी... ।

रजनी : (कुरा पूरा नसुनी बीचमै बोल्छे) के गरी हो ?

केटाहरूले चाहिँ कस्तो गर्छन् नदेख्या, नभोग्या हो र हामीले ! तँ आफैं भन् न, केटी भएर बाँच्न सजिलो छ त सरू ?

सरू : सजिलो छैन नि यार !

रजनी : हो त। यही कुरा यी पुरुषहरूलाई कसले बुझाइदियोस् के ! पलपल आफ्नो परिवारका लागि आफ्ना सपनाहरूको तिलाञ्जली दिएर मन दुःखी भए पनि अरूको खुसीका निम्ति मुखमा हाँसो ल्याएर बाँच्नुपर्छ पाइलैपिच्छे। असुरक्षित वातावरणमा तिरस्कृत र बलत्कृत हुँदै बाँच्नुपर्छ।

सरू : (भावुक बन्दै) त्यही त !

रजनी : अझै आरक्षणको कुरा गर्छन् ! हामी महिलाहरूलाई तेत्तीस प्रतिशत आरक्षण दिँदा कत्ति न ठूलो गुन लाइदिएको जस्तो। हामीलाई दानमा दिएको जस्तो ठूलाठूला कुरा गर्छन् यी पुरुषहरू। मेरो कन्पारा तात्छ यस्तो कुरा सोच्यो कि ! पुरुषहरूलाई चाहिँ सत्साठी (६७) प्रतिशत, हामी महिलाहरूलाई चाहिँ तेत्तीस (३३) प्रतिशत मात्र किन ? उनीहरूचाहिँ आमाको पेटबाट नौ महिनामा जन्मिछन् अनि के हामी महिलाहरूचाहिँ छ महिनामा जन्मिन्छौ र ? महिला-पुरुष दुवै आमाको कोखबाट नौ महिनामै जन्मिने हो भने किन त्यस्तो पक्षपात ? किन हामीलाई दोस्रो दर्जाको नागरिकलाई जस्तो व्यवहार गर्ने ?

सरू : सही भनिस्।

रजनी : अझै यी पुरुषहरूलाई राति ओछ्यानमा स्वास्नीका रूपमा हामी महिला नै चाहिन्छ, तर हामी महिलाले अर्को एउटा महिला अर्थात् छोरी जन्माउँदा आजसम्म घोचपेच र वचन सुन्नुपर्ने ? यी पुरुषहरूलाई कसले भनिदियोस् यार,

महिला बनेर बाँच्न सजिलो छैन ! उफ् (मुखले लामो सास फाल्दै), एकैपटक दस जना चुतियाहरूसँग अलगअलग मुडमा बोल्नुपर्छ यार !

सरू : हो त, सही भनिस् । अझै आफ्नै बाबासँग भेट्न जाँदा पनि आफ्ना पतिसँग आज्ञा लिनुपर्छ । यो त्यो संसार हो, जहाँ छोरी बिदा भएपछि उसको हकदार नि बदलिन्छ ।

रजनी : हो त ! यी पुरुषहरूलाई मात्र के भनौँ के ! हामी महिलाहरूको सबैभन्दा ठूलो शत्रु त हामी महिलाहरू नै हुन्छौँ के ! आफूले जन्माएको छोरीका लागि छुट्टै नियम र मापदण्ड सम्झौता गर्छौं, तर अरूले जन्माएको छोरी घरमा बुहारी भएर भित्रिनासाथ उसका लागि मात्र नियम, मापदण्ड सबै कडा बनाइन्छ । अदृश्य पर्खालहरूभित्र थुनेर आफ्नो कन्ट्रोलमा आफूभन्दा मुनि दलाएर, अनि पेलेर राख्ने दुस्प्रयास गरिन्छ । त्यो पनि सासू, आमाजू, नन्द आदिजस्ता त्यस घरका अरू महिलाहरूद्वारा नै । समाजमा सानो घटना घटोस् त, त्यो बेलामा पुरुषहरू त्यति सक्रिय हुन्नन् तर सानो कुरालाई कपडा यस्तो लगाएको, उस्तरी हिँडेको आदि छेउ न टुप्पाका कुराहरू गरेर अरूको कुरा काट्ने र बदनाम गर्ने कार्यमा पनि महिलाहरू नै लाग्छन् । जसले बुहारी बनेर सबैको दुःख बुझिरहेकी हुन्छे, उसैको दुःख बुझ्ने त्यहाँ कोही हुन्न । बूढा भएका बुबाआमा वृद्धाश्रममा भेटिनुमा बुहारी खराब भएर मात्र होइन, छोरा पनि नालायक भएर हो भन्ने कुरा कसैले बुझ्नै खोज्दैनन् ।

सरू : हो भन्या ! विवाहपछि हामी छोरी पराइ घर त

जान्छौँ, साथसाथै छोरीले घरको हरेक खुसी पनि साथमा लिएर जान्छे भनेर बुझ्ने कहिले ?

रजनी : त्यही त । एउटा नारीलाई दिइने सबैभन्दा अमूल्य उपहार नै इज्जत हो । मैनबत्तीले मात्र घर उज्यालो बनाउँदैन, छोरीहरूले पनि घर उज्यालो बनाइदिन्छन् भन्ने यथार्थ बुझ्नुपर्ने हो । हामी छोरीहरू जन्माउने नारीलाई हेला गर्न बन्द गर्नुपर्छ र आफ्नी छोरी होस् या बुहारीका रूपमा आएकी अर्काकी छोरीलाई समान व्यवहार गर्नुपर्छ, सुरक्षित वातावरण दिनुपर्छ भनेर यो समाजले कहिले सिक्ने ?

सरु : हो रजनी ! हामीलाई लुट्ने आफ्नाले नै हुन् । पराइलाई त के थाहा कि मनको भित्ता कहाँ कमजोर छ भनेर ।

रजनी : सत्य भनिस् । अनि यी पुरुषहरूले पनि आमा र श्रीमती दुवैलाई सधैँ इज्जत र प्रेम गर्न सिकून् । आमाले उनीहरूलाई यो दुनियाँमा ल्याएकी छिन् र श्रीमती सारा दुनियाँ छाडेर उनीहरूसित आएकी छिन् ।

सरु : हुन त हो के रे... तर खोइ ! सोचेजस्तो नहुने । श्रीमतीको त के गर्लान् र ? किनभने विवाह एउटा किताब हो, जसको पहिलो अध्याय लयात्मक हुन्छ, तर बाँकी सबै पट्यार लाग्दो ।

हा.हा...हा... ! (दुवैजना हाँस्छन्)

रजनी : (हाँस्दै) मलाई त कस्तो अचम्म लाग्छ के ! कति भेदभाव छ है हाम्रो समाजमा ! गरिबले कपडा सिलाए दमाइ रे, अनि धनीले सिलाए फेशन डिजाइनर रे !

सरू : हो त ! अरूको त कुरै छोडौँ न, आफ्नै शरीरका अङ्गहरूबीच त भेदभाव छ । हेर न, खुट्टा छोए धर्म रे । टाउको छोए पाप रे !

रजनी : त्यही त ! यस्तो कुरा सम्झियो कि रिसै उठ्छ भनेको । मोरा केटाहरू, आफ्नी गर्लफ्रेण्डलाई चाहिँ सबैले छुन चाहन्छन्, तर उनीहरूलाई नै आफ्नी श्रीमती चोखो र पवित्र चाहिन्छ फेरि ।

सरू : (हाँस्दै) गङ्गाजल छर्केर पवित्र बनाए मात्र हो । हा..हा.हा.. !

रजनी : (हाँस्दै) त्यही त, हा..हा..हा.. !

सरू : हा..हा... ! अनि यस्तै सानातिना कुराहरूबीच समझदारी कम भएर आजकाल सम्बन्धहरू रोटीजस्तै भइसकेका छन् । अलिकति थोरै ताप बढ्यो कि जलेर खरानी भइदिन्छ ।

रजनी : हो त । त्यस्ता खुसी दिन, हँसाउन नसक्नेले फसाउन पनि कोसिस नगर्नु नि !

सरू : त्यही त । अनि सानातिना कुराहरूले गर्दा छुट्टिन खोज्नेहरूले यो बुझुन् कि यदि छुट्टिएर खुसी मिल्ने भए खसेका पातहरू कहिल्यै ओइलाउने थिएनन् नि !

रजनी : अब अति नै भएपछि र जति कोसिस गर्दा पनि आफ्नो कदर नभएपछि छुट्टिन्छन् पनि होला । किनभने कागतीलाई निचोर्दा कागतीको रस आउँछ र सुन्तला निचोर्दा सुन्तलाकै । जसको भित्र जे छ त्यही बाहिर आउने हो । त्यसैले सुखले मानिसलाई मख्ख बनाए पनि दुःखले मानिसलाई

परिपक्व भने अवश्य बनाउँछ है ।

सरू : त्यही त ! जीवनमा भेटिने मानिसहरू बादलजस्तै त हुन् । कसैले शीतलता छर्छन् त कसैले उज्यालो ।

रजनी : हो नि ! यस्तो कुरा बुझेपछि कसैले छोडेर जाँदैमा के चिन्ता लिनु ? असल मानिस भित्रिनका लागि खराब मानिस निस्किनैपर्छ नि, होइन र ?

सरू : हो नि ! त्यसैले त म भन्ने गर्छु - जसले जति साथ दिए, उनीहरूको साथलाई धन्यवाद । जसले बीचमै छोडिदिए, ती हातहरूलाई पनि धन्यवाद ।

रजनी : एकदमै सही भनिस् सरू तैँले । एउटा मात्र जिन्दगी पाएका छौँ, अलि ढङ्ग मिलाएर बर्बाद गरौँ न । जीवन आफैँले बनाउने चित्र हो । सही सोचे सुन्दर चित्र, अनि गलत सोचे विचित्र । हा.हा..हा.. !

'सरू ! यो गफाडीले तिमीलाई बेचिदेली है । के गफ हान्दैछे यो ?' साहिल हाँस्दै उनीहरू बसेकोतिर आउँदै भन्छ । त्यो देखेर रजनी पनि हाँस्छे ।

रजनी : आइज आइज, हाउडे राजा ! अनि खोइ त बाँकी दुई जना ?

साहिल : उतै छन् काम गर्दै । मचाहिँ एकछिन ट्वाइलेट जान आउँदा छिरेको यहाँ । अनि तँलाई थाहा छ, रजनी ? तैँले राजा भनेर बोलाउँदा त लाग्छ, सरकारसँग छुट्टै राज्य माग गरौँ । हा.हा..हा.. !

रजनी : अब तैँले त्यही गर्न बाँकी छ । हा..हा..हा.. !

साहिल : (रजनीको कानजिकै गएर) सुन् न, माया ! म मुसुक्क हाँस्छु, तँ फिदा हुनु ल ?

रजनी : (हाँस्दै) ए है ! भइहाल्छ नि । म पनि तेरो त्यही डरलाग्दो हाँसो नै सम्भिरहेकी थिएँ । बाडुली लागेन तँलाई ?

साहिल : सम्भिरहनुपर्दैन माया मलाई । बस्, नबिर्सिदिए पुग्छ ।

रजनी : (हाँस्दै) ब्रो ! तिमीसँग पूरा जिन्दगी बाँकी छ यस्तो मूर्ख कुरा गर्न । आज छुट्टी लिऊँ है ?

उनीहरूको कुरा सुनेर सरूचाहिँ केही नबोली मुसुमुसु हाँस्दै थिई ।

साहिल : ब्रो रे ? तेरै पोइ होला नि तेरो ब्रो ! धेरै घमण्ड नगर् माया ! हावालाई पनि निकै घमण्ड थियो उसको स्वतन्त्रतामा । कसैले उसलाई बेलुनमा भरेर बेचिदियो ।

रजनी : उता जा फटाहा ! मलाई पनि छोड्दैनस् । मार्लान् मेरो श्रीमान्ले तँलाई । (हाँस्छे र सरूतिर फर्कंदै भन्छे) ओइ सरू, कुकुरले के गर्छ अब ? यहाँ मान्छेले नै जुत्ता चाट्न थाले । हा.हा.हा.. !

साहिल : (ऊ पनि सरूतिर फर्किंदै) ओइ सरू ! आजकाल सर्पहरू बेरोजगार भए कि के हो ? मान्छेले नै पो डस्न थाले । हा.हा.हा. !

रजनी : (साहिलतिर हेरेर आखाँ घुमाउँदै) त्यही त है ? सम्हालिएर हिँड्ने गरौँ है । जता पनि मान्छेका सोचहरू गिरेका छन् । ठोक्किएर लडिएला । हा.हा.हा... !

साहिल : उफ् ! नसकिने, कोहीकोही मानिस हामीबाट सिकेर हामीलाई नै सिकाउन थाल्छन् । (मुख बङ्ग्याउँदै भन्छ) अनुहारमा डण्डीफोर र जिन्दगीमा शत्रुहरू त कति आए, कति गए.. मलाई बाल !

रजनी : (हाँस्दै) तेरो टाउको दुश्मन ! गोबर भरिएको त्यो दिमागमा केटीलाई जिस्काउने बाहेक केही आँउदैन है तिमीहरू केटाहरूलाई ? ...त्यसैले त म भन्ने गर्छु,

पुरुष भनेको पुरुष हो,
जुत्ता पुस्ने बुरुस हो ।
लुगा सिलाउने कुरुस हो,
लास्टै गनाउने उडुस हो । ..हा..हा..हा.. !

त्यो सुनेर सरू खित्का छोड्दै हाँस्छे । साहिलचाहिँ केही बेर सोच्छ र भन्छ -

साहिल : खुब थाहा रहेछ त बोक्सीलाई ! अब म भन्छु, तँ सुन्....

महिला भनेको मैला हो,
फोहोर बोक्ने थैला हो ।
जति फुर्ती लगाए नि,
जाने भनेको पोइला हो ।

रजनी : (साहिलसित सोध्छे) सक्यो ? हाँस्ने बेला भयो ? म हाँस्दिम् ?

साहिल : (मुख बिगार्दै) हाँसे हास्, नाचे नाच्, मलाई

के सोधिरहेको ? इग्नोर गर्न सिक् इग्नोर । यसको धेरै स्कोप छ ।

रजनी : (साहिललाई जिस्क्याउँदै) हुन्छ सिक्छु, अनि तेरो त्यो अघिको कुरामा आएर हाँसिदिन्छु ल ? तर अहिलेचाहिँ रेस्टरूम गएँ ल ? आएर हाँस्छु ।

त्यति भन्दै ऊ अलि उता बाहिर अलग्गै भएको रेस्टरूमतिर लाग्छे ।

साहिल : उफ् ! यसको घमण्ड । पानी परिरहेको छ नभिज्नू है, रजनी ! फेरि घमण्ड पखालिएला तेरो !

साहिलको कुरा सुनेर रजनी हाँस्दै 'तेरो टाउको' भन्दै रेष्टरूमभित्र छिर्छे ।

# भाग ११

आभास धनाढ्य परिवारको छोरा हो। उसको दाइको नाम प्रजय हो । प्रेम अन्धो हुने रहेछ । जब कोहीसँग सच्चा प्रेम हुन्छ, तब यसले केही पनि देख्दैन भनेको जस्तै प्रजयको पनि आफ्नै क्लासमा पढ्ने एक गरिब किसानकी छोरीसँग साँचो प्रेम हुन्छ । उसको नाम अन्जु हुन्छ ।

अन्जु सुन्दर हुनुका साथमा समझदार पनि थिइन् । एक दिन प्रजयले अन्जुलाई उसले उनीसँग प्रेम र विवाह गर्न चाहेको कुरा बताउँछ । अन्जुले केही बेर सोच्छिन् । आफू एक गरिब परिवारको भएको कारण प्रजयसँग विवाह गर्न नसक्ने भन्छिन् ।

अन्जुले आफूसँग विवाह गर्न नखोजेको कारण थाहा पाएर केही समयपछि प्रजयले अन्जुको आमाबुबासँग नै कुरा गर्छ । अन्जुलाई फेरि सम्झाउँछ । प्रजयले धेरै नै मिहेनत गरेपछि बल्ल अन्जु विवाह गर्न तयार हुन्छिन् । दुवै जनाको विवाह हुन्छ । दाम्पत्य जीवन एकदम राम्रोसँग चल्न थाल्छ ।

केही समयपछि अन्जुलाई चर्मरोगले सताउन थाल्छ ।

उनको सुन्दरतामा ह्रास आउन थालेर उनी कुरूप हुन थाल्छिन् । रोगले कुरूप बनाउन थालेपछि उनलाई श्रीमान् प्रजयले आफूलाई छोड्ने त होइन भन्ने डरले अत्यन्तै सताउन थाल्छ । त्यसैले त्यस रोगको उपचार गर्न सक्दो प्रयास गर्न थाल्छिन् ।

समय बितिरहेको थियो । बिस्तारै समयसँगै अन्जुको कुरूपता पनि बढिरहेको थियो । एक दिन एउटा कामले प्रजय चितवन गएको थियो । आफ्नो काम सकाएर काठमाडौं फर्किंदै गर्दा अकस्मात् बाटोमा उसको कार दुर्घटना हुन्छ र सोही दुर्घटनाले गर्दा उसको दुवै आँखाको ज्योति गएर अन्धो हुन्छ ।

यस दुर्घटनाको केही समयपछि उनीहरू दुवैको जीवन फेरि सामान्यसाथ बित्न थाल्छ । अन्जु आफ्नो रोगले गर्दा प्रतिदिन कमजोर र कुरूप हुँदै थिइन्, तर आफ्ना श्रीमान्ले देख्न नसक्ने भएकोले प्रजयले अन्जुलाई पहिलाजस्तै माया गर्थ्यो । त्यसैले उनीहरूको दाम्पत्य जीवन ठीकठाक नै चलिरहेको थियो ।

केही सालको बिमारीपछि अन्जुको मृत्यु हुन्छ । आफ्नी प्राणप्यारी जीवनसङ्गिनी अन्जुको मृत्युपछि प्रजय अत्यन्तै दुःखी हुन्छ । ऊ भित्रबाटै टुट्छ । एक्लै बस्दा अन्जुको यादले सताएर त्यो स्थान छोड्ने निर्णय गर्छ ।

ऊ त्यो घर सदाका लागि छोड्न घरबाट बाहिर निक्लँदै थियो, त्यही बेला उसको एक जना छिमेकी आएर अन्जुको मृत्युप्रति सहानुभूति देखाउँदै दुःख व्यक्त गर्न थाल्छ र भन्छ, 'अब अन्जुबिना तपाईंले के गर्नुहुन्छ प्रजयजी ? तपाईं त

एक्लो हुनुभयो । अन्जुले तपाईंको एकदम ख्याल राख्थिन् । अब यो अन्धो, अन्धकारमय जीवन कसरी बिताउनुहुन्छ होला तपाईंले ? म त सम्झेरै अत्तालिसकें !"

प्रजयले लामो गहिरो सास लिन्छ । आफ्नो कालो चस्मा आफ्ना दुवै हातले निकाल्दै भन्छ, "म कहिल्यै अन्धो भएकै थिइनँ । मेरी श्रीमतीले ऊ कुरूप भएको कारणले कतै मेरो ऊप्रतिको मायामा कमी आयो या मैले उसलाई माया गर्न छोडें भन्ने नलागोस् भनेर उसको खुसीका लागि यतिका वर्षसम्म अन्धो बनेर बसेको मात्र छु !"

प्रजयको त्यो कुरा सुनेर त्यस छिमेकीको आँखा रसाउँछ ।

यदि जीवनभर खुसी हुन चाहन्छौं भने हामीले मानिसहरूको कमी–कमजोरीतिर होइन, उनीहरूका राम्रा कुराहरूतिर ध्यान दिन सक्नुपर्छ । तब मात्र हाम्रो जीवन सजिलो र राम्रो हुन सक्ने कुरा आभासले आफ्नो दाजु प्रजयबाटै सिकेको थियो । ऊ आफ्नो मोबाइलमा दाजु प्रजयसँगै हुदाँका फोटाहरू हेर्दै विगतका यादहरूमा टोलाइरहेको थियो । पछाडिबाट आएर उसको क्लासको साथी रविले एक्कासि झस्याङ्ग पारिदिन्छ ।

रवि : ओइ ! कता टोलाइरहेको ?

आभास : (आफूलाई सम्हाल्दै) कतै होइन यार... यसै मोबाइल चलाइरहेको !

रवि : अँ, सुन् न । तँसँग एउटा कुरा सेयर गर्नु थियो यार !

आभास : भन्न यार ! म फ्रि नै छु ।

रवि : त्यो आकृति छे नि, सेक्सन बीको के !

आभास : अँ, चिन्छु । तेरो गर्लफ्रेण्ड हैन ?

रवि : हो, त्यही...

आभास : किन ? के भयो र उसलाई ?

रवि : उसलाई त केही भएको छैन । (दुःखी हुँदै) बरु हाम्रो रिलेशनसिपचाहिँ टुट्लादुट्ला भइसक्यो यार !

आभास : (आश्चर्य मान्दै) त्यस्तो राम्रो थियो त तिमीहरूको सम्बन्ध ! किन ? के भयो र त्यस्तो ? सबै भन् न ।

रवि : त्यही भनेर मन हल्का गर्न त आएको नि । ल सुन्, आकृति र मेरो भेट अनि चिनजान यही कलेजमै भएको थियो । सुरुसुरुमा हामी एक-अर्कासँग भेट्थ्यौँ । एकदमै खुसी हुन्थ्यौँ । त्यसैले जति बोले पनि, भेटे पनि सँगै बस्न पाए हुन्थ्यो भन्ने लाग्थ्यो ।

आभास : अनि ?

रवि : हाम्रो भेट बाक्लिन थाल्यो । कलेजमा मात्र नभएर हामी सामाजिक सञ्जालहरूमा र फोनमा पनि निकै धेरै बेर एक-अर्कासँग कुरा गर्ने र रमाउने गर्न थाल्यौँ । अनि खोइ कति बेला पत्तो नै नपाइ एक-अर्कासँग प्रेम भएछ । त्यसैले संसार नै भुल्न थाल्यौँ ।

आभास : अनि ?

रवि : कति रमाइला थिए ती सुरुका दिनहरू ! ऊ हाँसेको देख्दा सारा संसार पाएजस्तै लाग्थ्यो । अरू त के कुरा, हामी कहिलेकाहीँ एक-अर्कासँग रिसाउँदा या ठुस्किँदा

पनि कति 'क्युट' लाग्थ्यो । हामीलाई जे गर्दा पनि खाली माया गर्न मात्र मन लाग्थ्यो । कहिले एक-अर्कालाई भेटौँ या देखौँ जस्तो हुन्थ्यो । त्यसैले एक-अर्कासँग भेट्ने या भिडियो कल गर्ने क्षणको प्रतिक्षा गर्दै बस्थ्यौँ । त्यही पलको उत्साहमा पहिलाबाटै चिटिक्क परेर बस्थ्यौँ ।

आभास : अनि ?

रवि : एक दिन मौका मिलाएर मैले उसको जन्मदिनको बेला उसलाई सप्राइज पार्टी दिएँ । त्यही दिन प्रपोज पनि गरेँ । आशा गरेअनुरूप उसले मेरो प्रस्ताव स्वीकार गरी । हामी दुवै निकै खुसी भयौँ ।

आभास : अनि ?

रवि : म त्यति बेला बानेश्वरमा दुईवटा कोठा लिएर एक्लै बस्थेँ । ऊ पनि गर्ल होस्टल डिल्लीबजारमा एक्लै बस्थी । हामीले सोच्यौँ, यसै दुवैको खर्च भईरहेको छ, बरु सानो फ्ल्याट लिएर सँगै किन नबस्ने ? खर्च पनि कम लाग्ने र सँगै पनि बस्न पाइन्छ भन्ने लाग्यो । त्यस्तै गर्‍यौँ पनि । हामी लिभिङमा बस्न थाल्यौँ ।

आभास : अनि ?

रवि : सुरुका केही महिना एकदमै रमाइलोसँग बित्यो । बिस्तारै हाम्रो सम्बन्धमा खोइ कसको आँखा लाग्यो, अलिअलि गरेर अमिलोपन आउन सुरु भयो । अलग बसेर लभ गर्दाजस्तो उत्साह सँगै बस्न थालेपछि आफैँ कम हुने रहेछ भन्ने महसुस हुन थाल्यो । अहिले त खोइ, जति राम्रो गर्छु भनेर प्रयास गर्दा पनि सानासाना कुराहरूमा मनमुटाव, घोचपेच र गुनासाहरू

मात्र हुन्छ । यत्तिकै झगडा मात्र परिराख्छ । त्यसैले म पनि दिक्क भइसकैं र ऊ पनि छुट्टै बस्ने कुरा गर्दछे । के गर्ने, के नगर्ने भइसक्यो भन्या !

आभास : (केही बेर सोचेपछि) एकछिन पख्, मेरो कुरा सुन् । ल अब पहिला एकैछिन तिमीहरू सँगै बस्न थालेका सुरुका दिनहरू सम्झी । केके गथ्यौं तिमीहरू ?

रवि : (भावुक हुँदै) ती दिनहरूका कुरै नगर् न ! कति रमाइलो हुन्थ्यो ! हामी दुई जना एक-अर्कासँग एकछिन पनि अलग्गिन खोज्दैन थियौं । बिहान आँखा खुलेदेखि राति ओछ्यानमा पुगेर आँखा बन्द नहुन्जेलसम्म हामीलाई कसरी एक-अर्कालाई खुसी पार्ने भन्ने कुरामा कम्पिटिसन नै चलेको जस्तो लाग्थ्यो । चाहे त्यो बिहानको बेड टी बनाउने कुरा होस् या खाना बनाउने या अरू केही, एक-अर्काका सानासाना कुराहरू याद हुन्थ्यो । गिफ्ट दिन्थ्यौं । 'आइ लभ यु' भन्थ्यौं र माया गथ्यौं । तर खै कसरी हो, केही पनि त भएको छैन त्यस्तो ठूलो कुरा, तैपनि हामी दुवैमा पछि चिडचिडापन आउन थाल्यो । ऊ पनि मलाई यत्तिकै 'तैंले यस्तो गरिस्, उस्तो गरिस्, पहिला त खुब यस्तो गर्छु भन्थिस्, फलानोले त्यस्तो गरिसक्यो, तँलाई केही मतलब छैन, माया गर्न पनि कम गरिस्' आदि भनेर सधैंजसो किचकिच र गुनासाहरू मात्र गर्छे । अनि म पनि 'ह्या ! यो यस्तै त हो, यत्तिकै कराइराख्छे' भनेर वास्ता गर्दिनँ । चुप लागेर बस्छु ।

पहिला ऊ रिसाउँदा मैले फकाउथें । ऊ फेरि नर्मल भएर हाँस्दै मलाई अँगालो मार्थी । 'आइ लभ यु, बदमास्'

भन्दै माया गर्थी। आजकाल त्यही कुराहरू गर्दा केही मतलब गर्दिन। मेरा प्रयासहरूलाई महत्त्व दिन्न। बरु यस्तो पो भन्न सुरु गर्छे, 'तेरा यस्तै कुराहरू सुनेर पहिला म फसेँ। आफ्नो जीवन नर्क बनाएँ। के सोचेको थिएँ, के भयो ?' अझै यस्तै घाँसफुस कुराहरू मेराअगाडि नगर भन्दै उल्टो पड्किन्छे भन्या ! यत्तिकै गर्दन फुलाएर बसिराख्छे। हे भगवान् ! केही गर्दा पनि सुख छैन मलाई ! पागल हुन मात्र बाँकी छ।

आभासले रविका सबै कुराहरू बडो ध्यानपूर्वक सुनेर केही बेर सोचेपछि भन्छ।

आभास : रवि ! विश्वप्रख्यात केही मनोवैज्ञानिकहरूले सयौँ सफल जोडीहरूमाथि रिसर्च गर्दा के पाए भने 'उनीहरू सबै सधैँ आफ्नो पार्टनरसँग एकदमै मजबुत भावनात्मक रूपले जोडिएका थिए।' त्यसैले गर्दा उनीहरूको रिलेशन त्यस्तो मजबुत भएको थियो। अरू सामान्य जोडीहरूको तुलनामा उनीहरूको जोडी विशेष देखिन्थ्यो।

रवि : (उत्सुक हुँदै) भन्नाले कसरी ? अलि बुझिनँ।

आभास : भन्नाले जिन्दगीको जस्तोसुकै कठिन समय या परिस्थितिहरूको सामना गर्नुपरे तापनि उनीहरूको सम्बन्धमा कटुता या अमिलोपन कहिल्यै आएन। त्यस्तो परिस्थितिहरूमा एक दिन सबै आफैँ ठीक हुनेछ भनेर उनीहरूले आफ्नो रिलेशनसिपलाई परिस्थिति बमोजिम कहिल्यै छोडेका थिएनन्।

रवि : (आश्चर्य मान्दै) के रे ?

आभास : हो, सही सुनिस्। उनीहरूले त्यस्तो कहिल्यै गर्दैनथे। बरु आफ्नो रिलेशनसिपको जिम्मेवारी आफैँले लिन्थे

र हरेक दिन आफ्नो पार्टनरका लागि केही यस्तो कार्य गर्थे, जसले गर्दा आफ्नो पार्टनरको जीन्दगी अझै सुन्दर बनोस् र अझै उसलाई खुसी मिलोस् । अर्थात्, उनीहरू आफ्नो पार्टनरको लाइफ अझै मूल्यवान् बनाउने कार्यहरू गर्थे । अनि हरेक दिन आफैँलाई सिर्फ एउटै प्रश्न गर्थे – 'आज म त्यस्तो के गरौँ ? उसलाई अझै खुसी कसरी पारूँ ?'

त्यही एउटा प्रश्नले गर्दा उनीहरू हरेक दिन आफ्नो पार्टनरको लाइफ राम्रो बनाउन सानासाना प्रयासहरू गर्थे । यसले गर्दा उनीहरूको पार्टनरलाई उनीहरूको सही मूल्य थाहा हुन सक्यो । यही कारणले नै उनीहरू एक-अर्कासँग भावनात्मक रूपले बलियोसँग जोडिए । आज उनीहरू असी वर्षको हुँदा पनि आपसमा अत्यन्तै लगावका साथ प्रेम गर्छन् ।

त्यसैले रवि, गहिरिएर हेर्ने हो भने यो एकदमै व्यावहारिक कुरा हो, किनभने हरेक दिन हामीले हाम्रो पार्टनरको लाइफ राम्रो बनाउन स-साना प्रयासहरू गर्छौँ । ती प्रयासहरू उनीहरूलाई हरेक दिन याद हुनेछ । यसले गर्दा उनीहरूलाई हामीले कति धेरै माया गर्छौँ भन्ने लाग्छ । अनि हाम्रो त्यस आभार व्यक्त गर्ने प्रकृति देखेर उनीहरू सधैँ हामीसँग जोडिएर बस्छन् र हाम्रो साथमा जोडिएरै रहन चाहन्छन् । छुट्टिने र छोड्नेबारे सोच्न पनि सक्तैनन् ।

रवि : हुन त हो के रे ! तैपनि कन्फ्युज भएँ यार म त !

आभास : त्यसो भए, यसलाई व्यावहारिक रूपले बुझ्ने कोसिस गरौँ । ल सुन्, रवि...

एक जना विक्रम भन्ने व्यक्तिसँग एउटा एकदमै प्यारो

कुकुर थियो । कुकुरको नाम ब्रुनो थियो । ब्रुनो यति समझदार थियो कि  हरेक दिन विक्रमका लागि घरबाहिर पत्रिकावालाले फ्याँकेको न्युजपेपर लिएर आउँथ्यो र विक्रमलाई दिन्थ्यो । यसरी ब्रुनोले हरेक दिन विक्रमको मद्दत गर्थ्यो ।

एक दिन के भयो भने ब्रुनोको कुनै एउटा गल्तीको कारणले विक्रमले ब्रुनोलाई एकदमै गाली गर्‍यो । यहाँसम्म कि रिसको झोंकमा ब्रुनोलाई लत्याएर घरबाट बाहिर निकालिदियो ।

अर्को दिन विक्रम उठ्छ । उसले पढ्नका लागि न्युजपेपर भेट्टाउँदैन । उसलाई न्युजपेपर घरबाहिर हुन्छ भन्ने कुरा याद आउँछ । त्यसलाई लिन ऊ आफ्नो घरको ढोका खोल्छ । उसले पुच्छर हल्लाउँदै आफ्नो मुखमा न्यूजपेपर च्यापेर ढोकामा उभिरहेको ब्रुनोलाई देख्छ ।

त्यो देखेर विक्रमका दुवै आँखा आँसुले भरिन्छन् । उसलाई आफूले कस्तो तल्लो स्तरको हर्कत गरेछु भन्ने महसुस हुन्छ । आफैँसँग लाज लाग्छ । विक्रमले त्यो बेला आफ्नो भावना नियन्त्रण गर्न सक्तैन र ब्रुनोलाई झ्वाम्म अँगालो हालेर रुन थाल्छ । अबचाहिँ विक्रमलाई ब्रुनोले उसलाई कति धेरै माया गर्दो रहेछ भनेर महसुस भइसकेको हुन्छ । त्यस दिनपछि विक्रमले आफ्नो ब्रुनोलाई  कहिल्यै गाली गर्दैन । कहिल्यै चोट पुर्‍याउँदैन ।

अब सोच्, रवि ! हामीलाई माया गर्ने मानिस, जसले हाम्रो जिन्दगीलाई अझै सजिलो र सहज बनाउन मद्दत गरिरहेको छ भने के हामीले उसलाई कहिल्यै आफूबाट टाढा

जान दिन्छौं होला त ? कदापि दिँदैनौं । हो, ठीक यही नियम हाम्रो सम्बन्धमा पनि लागु हुन्छ, बुझिस् ?

रवि : बुझ्न त बुझें, तर मैले पनि आफूले सकेको कोसिस गरिरहेकै छु त !

आभास : छैन रवि, छैन । तेरो रिलेशनसिपमा अरू सबैको रिलेशनसिपहरूमा हुनेजस्तै लापरबाही या कमी देखिसकें मैले ।

रवि : (आश्चर्य मान्दै) कस्तो ?

आभास : ल सुन्..... तिमीहरू दुई जनाका पहिलाका दिनहरू कति सुन्दर थिए ! फोनमा बोल्यो, च्याट गर्‍यो, घुम्यो, रमाइलो गर्‍यो । घण्टौं बितेको पत्तो नै हुँदैन थियो । तिमीहरूलाई एक-अर्काका कुरा एकदमै राम्रा लाग्थे । अरू त के कुरा ! रिसाउँदा र गाली गर्दा पनि आफ्नै लाग्थ्यो, माया मात्र लाग्थ्यो भनेर तैंले आफैंले भनिसकिस् होइन र ?

रवि : हो नि त्यो त ।

आभास : त्यसपछि तिमीहरू सँगै बस्न थाल्यौ । त्यसको केही समयपछि नै तिमीहरूलाई आफ्नो पार्टनरमा भएको परिवर्तन देखेर लाग्न थाल्यो, महसुस हुन थाल्यो कि तिमीहरू पहिलाको लभ गर्दाको रवि र आकृति रहेनौ । त्यसैले तिमीहरूमा मायाभन्दा धेरै कम्प्लेनहरू हुन थाल्यो अर्थात्, गुनासो गर्ने बानी हावी हुँदै गएर बिस्तारै चिडचिडाहट बढ्दै जान थाल्यो ।

आज तिमीहरू एक जना पूर्व फर्किएका छौ, अर्कोचाहिँ पश्चिम । जुनीजुनी साथै जिउने कसम खाएकाहरूलाई अब

हामी सँगै बस्न सक्दैनौं भन्ने लाग्न थालिसक्यो । आजकाल प्रायःजसो सबै जना प्रेम सम्बन्धपछि सँगै बस्न थाल्छन् । त्यसपछि 'के सोचें, तर के भयो' भन्नेजस्ता गुनासाहरू सुनिन्छन् । तिमीहरूले भोगिरहेका सबै कुरा उनीहरूले पनि भोग्छन् । उनीहरू सोच्छन्, 'विवाह गर्दा हाम्रो परिवारले ऋण नै लिएर भए पनि तामझाम गरेर त्यत्रो तडकभडक गरेको थियो । सबैतिर पब्लिसिटी गरिएको थियो । त्यसैले अब हामी छुट्टियौं या डिभोर्स गऱ्यौं भने दुनियाँले कुरा काट्नेछन् । सबैका अगाडि हाम्रो बेइज्जत हुनेछ । हाम्रो परिवारको नाक काटिनेछ ।' अनि आफ्नो जीवनसँग सम्झौता गरेर भाग्यलाई दोष दिँदै मन नलागीनलागी भए पनि एक-अर्कालाई झेल्न थाल्छन् । उनीहरू अरूलाई इम्प्रेस गर्ने चक्करमा आफू जीवनभर डिप्रेस भएर बाँच्न थाल्छन् ।

हेर् रवि ! जीवनसाथीहरू धेरै पाइएलान्, तर हाम्रो समस्यालाई आफ्नै सम्झेर त्यसलाई सँगै सामना गर्ने, हामीलाई एक्लो नबनाउने जीवनसाथीचाहिँ एकदमै कम पाइन्छन् । हामीले कमाउन नसक्ने बेलामा हाम्रो साथ छोड्ने र हामीलाई कुनै समस्या पऱ्यो कि 'अब योसँग मेरो भविष्य राम्रो छैन, यो अब हामीलाई काम लाग्दैन' भनेर आफ्नो नाफा-घाटा हेर्ने व्यापारी आफन्तहरू र प्रेमीहरूले त्यस कठिन घडीमा एक्लै पारेर साथ छोड्छन् । हो, त्यस्ताचाहिँ छ्याप्छ्याप्ती पाइन्छन् ।

रवि : अँ, यो एकदमै सही कुरा हो ।

आभास : कलिलो उमेरमा आफ्नो करियर र लक्ष्यभन्दा प्रेम-सम्बन्धलाई प्राथमिकता दिएर विवाह-बन्धनमा बाँधिएका

धेरै जना पछि पछुताएका देखेको छु मैले । त्यसैले आफू बने मात्र सारा संसार बन्छ । बल्ल पो सबै राम्रो हुन्छ । यो कुरा समयमै हामी सबैले भावनामा नबगी यथार्थ बुझ्न सक्नुपर्छ । तेरो रिलेशनसिपमा पनि त्यही भइरहेको छ ।

'यो मेरो भइसक्यो । यो व्यक्ति मेरै त हो नि । अब उसका लागि पनि के खास गरिराख्नु, बोलिदिनु या बनिदिनु ? जे गरे पनि अब मलाई यसले छाड्ने होइन के रे ! अब अरू कसलाई पो देखाउनु छ र राम्रो बनेर ? जसलाई देखाउनु थियो, उसलाई देखाएर आफ्नो बनाइसकेकै छु ।' यस्ता ग्रान्टेड सोचहरू आउनु र त्यसैअनुरूप आफ्नो पार्टनरसँग व्यवहार गर्नु भनेको रिलेशनसिपका लागि एकदमै खतरनाक हुन्छ । हो, यही तेरो हकमा भइरहेको छ ।

यो मेरो भइसक्यो भन्ने खालका ग्रान्टेड सोचहरूले गर्दा हाम्रो पर्सनालिटी चेन्ज हुन थाल्छ । हामी लभ गर्दाको मानिस नै रहन्नौं । पूरै व्यक्तित्व परिवर्तन भइदिन्छ । जो व्यक्तिहरू एक-अर्कासँग प्रेम गरेर सधैं साथ बस्ने बाचा गरेका हुन्छन्, समयको अन्तरालमा त्यो व्यक्ति नै अर्कै हुन थाल्छ । फरक भइदिन्छ । जस्तै कि प्रेम-सम्बन्धमा हुँदाको गुड लुकिङ, चार्मिङ, फनी, इन्ट्रेस्टिङ, सपोर्टिङ, केयरिङ व्यक्ति पछि सोही कारणले इरिटेटिङ, एग्रेसिभ अर्थात्, पहिला भएभन्दा ठ्याक्क विपरीत व्यक्तित्वको बनिदिन्छ । ऊ जुन व्यक्तित्व देखेर पहिला इम्प्रेस भएको हुन्छ पछि ठीक त्यसको विपरीत मान्छे नै पूरै फरक पाउन थालेपछि ऊ पनि सानासाना कुराहरूमा कम्प्लेन गर्ने, उसका अगाडि राम्रो भएर प्रस्तुत

नहुने गर्न थाल्छ । यसले गर्दा त्यो सम्बन्ध बोरिङ हुन थाल्छ । अनि हामीमा पहिलाको जस्तो एक्साइटमेन्ट र खुसीको लेभल बिस्तारै घट्दै जान्छ । त्यो रिलेशनसिप भित्रबाटै खोक्रो र कमजोर हुँदै जान्छ ।

यसबाट आफ्नो पार्टनर बोरिङ हुन थाल्छ । हामीलाई खुसी दिने अरू केही कुरा या अरू कोही व्यक्तिलाई महत्त्व दिनु या 'डिस्ट्रयाक्सन' हुनु स्वभाविक नै हो । तर हामीले गरेको त्यस कार्यले हाम्रो पार्टनरलाई उसको महत्त्व हाम्रो नजरमा कम हुँदै गएको लाग्न थाल्छ । अनि त्यस सम्बन्धमा अझै दुरी बढ्न सुरु हुन्छ । हामीभित्र भएको इगोले चर्को रूप लिन थाल्छ ।

दुवैको दिमागमा आउन थाल्छ, 'त्योभन्दा म के कम ? म किन त्यसका अगाडि झुक्नु ? त्यो बोल्यो भने मात्र बोल्छु । म किन पहिलो प्रयास गर्ने ? ह्या ! जेसुकै होस् ।' यस्ता सानासाना कुराहरूले नै ठूलाठूला सम्बन्धहरू बिगारिरहेका छन् । कस्ताकस्ता राम्रा सम्बन्धहरूमा भित्र माया भए पनि आफ्नो इगोको अगाडि लाचार भएर या एक-अर्काको प्रकृति र स्वभाव बुझ्न नसकेर टुटिरहेका छन्, रवि !

रवि : ओहो ! (आश्चर्य मान्दै) बल्ल पो बुझेँ मैले पनि । छर्लङ्ग भएँ । आफूले केके न गरिरहेको छु जस्तो लाग्थ्यो मलाई । यस्ता कुराहरूमा त आजसम्म ध्यान नै गएको थिएन । ओहो ! समस्या मेरो सम्बन्धमा या अरूमा होइन, मभित्र नै पो रहेछ ।

(हाँस्दै) यहाँ कुरा यस्तो रहेछ है, आभास ! मचाहिँ यही

कुरा बुझ्न नसकेर आफ्नो कर्मलाई दोष दिँदै पन्छिने प्रयासमा लागिरहेको रहेछु । छ्या ! यति कुरा नबुझेर पागलजस्तै केके सोच्ने र गर्ने कोसिस पनि गरेँ । हा.हा.हा.. ! अहिले त सम्झँदा पनि लाज लाग्यो यार !

आभास : (उत्सुक हुँदै) हो र ? के सोचिस् ? के गरिस् र त्यस्तो ?

रवि : (लजाउँदै) हा.हा.हा. बौलाहा नै हो म ! हा..हा..हा. पहिला पनि दुईवटा रिलेशनसिप कति कोसिस गर्दा पनि टिकेन । यसपालि पनि त्यस्तै हुन लागेको देखेर... (एकछिन रोकिन्छ)

आभास : (झनै उत्सुक हुँदै) के त ? के गरिस् ?

रवि : (लाज मान्दै) मेरो केटीसँग नै ग्रह नमिलेर पो हो कि ? कतै म समलिङ्गी (गे) पो हो कि ? यस्तो सोचेर है... (फेरि रोकिन्छ)

आभास : (आँखा ठूलाठूला पार्दै) के गरिस् ? (हाँस्छ) हा.हा.हा.. !

रवि : (मस्किँदै) के गर्नु नि ? एउटा गेहरूको सोसल डेटिङ वेबसाइटमा गएर उनीहरूसँग नजिकिने प्रयास गरेँ नि !

आभास : (मरीमरी हाँस्दै) हा.हा.हा. अनि ? सबै भन् न ।

रवि : (जोशमा भन्छ) ल सुन्.. म त्यो ग्रुपमा ज्वाइन भएँ । यही क्रममा काठमाडौँको एक जना सत्र वर्षीय विजय नाम गरेको केटा फेला पर्‍यो । म ऊसँग सामाजिक सन्जालमै

नजिकिन थालें । उसका भावनाहरूसँग आफ्ना भावना तुलना गर्न सुरु गरें । उनीहरूलाई र साथसाथै आफूलाई पनि बुझ्ने कोसिस गर्न थालें । विजयसँग म आफू पनि गे हुँ भनेर प्रस्तुत भएको थिएँ । त्यसैले हाम्रो कुराकानी बाक्लिन थाल्यो ।

आभास : अनि ?

रवि : अनि के नि, फोटो साटासाट भयो । त्यो भाइ कस्तो ह्याण्डसम फुच्चे रहेछ । टन्न केटीहरू फ्यान फलोइङ्स् भएको टिकटकतिर । हा..हा..हा.. विचराहरूलाई के थाहा ? उनीहरूको सपनाको राजकुमार गे हो भनेर..

आभास : अनि ?

रवि : फोन नम्बर साट्यौं । मलाई पनि आफ्ना बारेमा 'म के हुँ त' भन्ने कुरा जान्नु थियो । त्यसैले उसका प्रस्तावहरू स्वीकार्दै गएँ । हामी डेटिङ भनौं या भेट्ने दिन, फिक्स भयो ।

आभास : (झनै उत्सुक हुँदै) अनि ?

रवि : हामीले कालीमाटीको एउटा क्याफेमा भेट्यौं । ऊ मेरो नजिक आएर बसेदेखि लजाएर रातोपिरो भइरहेको थियो । केटीको जस्तै हाउभाउमा बोलेर मलाई आफूतिर आकर्षित गर्ने प्रयासमा थियो । म पनि उसको भावनाको कदर गर्दै उसले चाहेको जस्तै बनिदिएर आफूभित्र पनि उसका लागि त्यस्तै फिलिङ्स् ल्याउने कसरतमा लागिरहेको थिएँ । तर जतिसुकै प्रयास गर्दा पनि मभित्र त्यस्तो केही फिलिङ्स् आइरहेको थिएन । त्यो अर्कै कुरा हो । हा..हा..हा.. तर म पूरै प्रयासमा चाहिं थिएँ है !

आभास : हा.हा.हा... अनि ?

रवि : केही बेर हामी त्यहाँ बस्यौं । उसले कोठा नजिकै छ कुलेश्वरमा हेर्न जाम् भनेर मलाई प्रस्ताव राख्यो । म सोच्न थालेँ, 'कतै यो भीडभाडमा बसेर पो फिलिङ्स् नआएको हो कि ? एकान्तमा पुगेपछि आउन पो के बेर ? के भयो त गएर ? गइदिम् न त ।' यस्तो सोचेर मैले उसको प्रस्ताव स्वीकारेँ ।

आभास : (एकदमै उत्सुक हुँदै) हा.हा.हा.. अनि के भयो ?

रवि : (हाँस्दै) कस्तो हतार भएको तँलाई ? पख् न, भन्दै त छु नि । उसको कोठाभित्र पुगियो सात-आठ मिनेटजतिको यात्रापछि । एकदमै सामान्य कोठा रहेछ । एउटा खाट, एउटा ग्याँसको चुल्हो राखेको टेबल, अनि त्यसको तलपट्टि एउटा प्लास्टिकको बाटामा बिहान खाएका-पकाएका जुठा भाँडाहरू । भित्र त छिरेपछि ह्वात्त गएर अर्काको बेडमा बस्न पनि भएन । तर त्यहाँ बस्न त्यो बेडबाहेक अरू केही थिएन । त्यसैले म के गरूँ भनेर सोच्दै थिएँ । मेरो मनस्थिति बुझेर होला उसले आफैं बस्न भन्यो ।

विजय : (मुसुक्क हाँस्दै) यहाँ पानी सधै साँझ मात्र आउँछ । गाउँबाट पढ्नका लागि आएका हामी विद्यार्थीहरूको कोठा यस्तै हो हजुर ! अप्ठ्यारो नमान्दा हुन्छ । खाटमै बस्दा हुन्छ ।

रवि : त्यो सुनेपछि बल्ल म दुविधामुक्त भएँ र उसको खाटको छेउमा बसेँ । उसले फेरि भन्यो -

विजय : चिया बनाऊँ ?

मैले भनें -

रवि : भर्खरै त पिएको हो नि, नबनाऊ ।

विजय : त्यसो भए पहिलोपटक आउनुभएको पाहुनालाई खाली मुख त कसरी पठाउनु ? पानी भए पनि पिउनुस् ।

उसले एक ग्लास पानी मलाई दिँदै मसँगै टाँसिएर त्यही खाटमा बस्यो ।

आभास : (हाँस्दै) अनि ?

रवि : अनि के नि ! भन्न पनि लाज लाग्यो...

आभास : ह्या ! कस्तो होला ?

रवि : ऊ केटीहरूजस्तै नजर जमिनतिर लगाएर लजाउँदै आफ्ना हातका औँलाहरू आफैँले चलाउँदै मनका कुराहरू भन्न थाल्यो ।

विजय : (लजाउँदै) थाहा छ तपाईंलाई ? तपाईंको फोटो देख्नासाथ तपाईंसँग पहिलो नजरमै म प्रेममा परेको थिएँ नि । सोचेको भन्दा पनि धेरै राम्रो अनि असल हुनुहुँदो रहेछ रवि तपाईं । एकदमै समझदार पनि । मलाई कहिल्यै धोका नदिनू है ।

यति भनेर उसले मलाई झ्वाम्म अँगालो हाल्यो ।

आभास : (हाँस्दै) आम्मा ! हा.हा.हा... अनि ?

रवि : त्यति बेलासम्म ठीकै थियो । म उसको भावनाको कदर गर्दै आफूभित्र पनि उसका लागि त्यस्तै भावनाहरू ल्याउने प्रयासरत नै थिएँ । तर....

आभास : (उत्सुक हुँदै) तर के ?

रवि : के नि अब ! मेरो घाँटीको बायाँ साइडमा उसले अँगालो हालेर आफ्नो टाउको राखेको थियो । त्यो साइडको घाँटी र कानमा एक्कासि केही चिसो महसुस भयो । मैले त्यो के होला भनेर सोच्न पनि भ्याएको थिइनँ, उसका हातहरू मेरो शरीरको पछाडि चल्न थाले । उसका हातहरू कति छिटो मेरो छातीतिरै आइसकेछ । ब्रोले कति बेला आफ्नो जिब्रोले मेरो घाँटी र कान चाट्न भ्याइसकेछ ! ऊ त पूरै मूडमा के । उफ् ! अनि त के चाहियो र मलाई ? त्यो अघिको उसलाई बुझ्ने कोसिस गरिरहेको रवि फुस्स हावामा गायब भयो । 'बलात्कृत हुन गइरहेको छु, त्यो पनि एउटा पुरुषबाट नै' भन्ने सोच मेरो दिमागमा ड्वाट्ट आयो । अनि खै कहाँबाट मभित्र न्वारानदेखिको बल निक्लियो । आफ्नो अस्मिता जोगाउन म जन्याक्जुरूक उठें । म त्यसरी उठ्दा ऊ खाटबाट ब्वाङ्ग भुइँमा पछारियो । मेरो त्यस अप्रत्यासित हर्कत देखेर र आफू पछारिएको पीडाले होला, उसले मतिर आश्चर्यपूर्वक हेऱ्यो र रिसाउँदै सोध्यो ।

विजय : के भो ?

उसको त्यो आवाज र प्रतिक्रियाहरूलाई एकैछिन बेवास्ता गर्दै म सोच्दै थिएँ, 'ओहो ! जति कोसिस गर्दा पनि फिलिङ्स् पनि आएन र यो मोराले छुँदा पनि मन परेन । भनेपछि म 'गे' होइन, 'स्ट्रेट' नै रहेछु । अब यहाँ बसेर के काम ? भाग् भैरे ! नत्र यो ट्र्याक्टरले तेरो खेत जोत्छ । आफूलाई जोगा ।'

मैले आफैँलाई समेट्दै र सम्हाल्दै भनैं, 'मेरो सात वर्षको भान्जालाई स्कुलबसले बाटोमा नै छोडेर गयो होला घरबाहिर ।

आज दिदी-भिनाजु दुवै व्यस्त हुनुहुन्छ । उहाँहरूले भन्नुभएको थियो - भान्जा आउँछ, तँ त्यहाँ घरमा गएर बस्नू । हामी चार बजे आउँछौँ । भान्जाको बस तीन बजे नै आउँछ भन्दै थिए, कस्तो भुसुक्कै बिर्सेछु ! तीन बजेर दस मिनेट गइसकेछ । त्यो सानो बच्चा घरमा कोही नदेखेर देखेर रुँदै होला । बरु दिदी-भिनाजु चार बजे फर्केपछि फेरि आउँला । अहिलेलाई बाइ ।'

मैले विजयको जवाफको पनि प्रतिक्षा गरिनँ । उसको अनुहारमा फर्केर पनि हेरिनँ । त्यहाँबाट कुलेलाम ठोकेँ । हान्निएर घर पुगेँ । घर पुगेपछि विजयको याद आयो । विचराको भावनालाई फेरि अन्तिमपटक कदर गर्दै ऊ राम्रो मानिस भएको र त्यो माया, स्नेहका लागि धन्यवाद दिनुपर्छ भन्ने लाग्यो । मैले टेस्ट गर्न मात्र ऊसँग नजिकिएकोमा क्षमा माग्दै आफू स्ट्रेट नै रहेछु भन्ने कुरामा खुसी भएँ । ऊसँग सदाका लागि बिदा माग्दै एउटा म्यासेज पठाइदिएँ । बल्ल म हल्का भएँ ।

आभास : हा.हा.हा.. लास्टै हँसाइस् यार !

रवि : म स्ट्रेट नै रहेछु । मलाई किन त्यस्तो भयो होला भनेर तँसँग सल्लाह लिन आएको हुँ । तैँले मलाई यति राम्रोसँग बुझाएर महसुस गराइदिइस्, आभास ! त्यसका लागि तँलाई पनि धेरैधेरै धन्यवाद ।

आभास : (अझै हाँस्दै) हा..हा..हा.. बौलाहा ! देखिस् नि सानासाना कुराहरूलाई बेवास्ता गर्दा कस्तो हुनुपर्ने जीवन कस्तो हुन्छ !

रवि : (हाँस्दै) देखें यार ! कान समातें । अब घर गएर मेरो आकृतिलाई फेरि पहिलाकै रवि दिनेछु म । संयम भएर मेरो आकृति पनि फेरि पहिलाकै आकृति बन्ने पलको प्रतिक्षा गर्छु । अब जेसुकै भए पनि आकृतिलाई आफूबाट टाढा जान दिन्नँ । योचाहिँ पक्का हो ।

आभास : (उठ्दै) गुड । तैँले गर्नेछस् त्यस्तै । मलाई तँमाथि विश्वास छ, रवि ! ल त अहिले म गएँ है ? काम छ, बाइ ।

रवि : बाइबाइ, आभास !

# भाग १२

रजनी रेस्टरूमबाट निक्लेर आउँदा सरूलाई मात्रै देखेपछि उनले सोध्छे...

रजनी : (हाँस्दै) कहाँ गयो त्यो हावा मुसुमुन्द्रे ?

सरू : (हाँस्दै सोध्छे) को ? साहिल ?

रजनी : अँ (फेरि हाँस्दै) त्यही हाउडे !

सरू : (न्याउरो मुख पार्दै) खै कता गयो ? उतै गयो होला। केही नभनी गयो। मसँग त्यति बोल्न खोज्दैन।

रजनी : ए ! (केही बेरको सन्नाटा) मुखले प्यारप्यार बोलिराखे पनि मनको एकदम सफा र राम्रो छ है साहिल ? (प्रश्न तेर्स्याउँछे)

सरू : हो नि। बोलिराख्ने मान्छेको मन सफा हुन्छ नै।

रजनी : (गम्भीर हुँदै) सरू ! एउटा पर्सनल कुरा सोधूँ ?

सरू : लौ ! सोध् न... त्यस्तो फर्मल भइराख्नुपर्दैन।

रजनी : (सरूको आखाँमा हेर्दै) त्यति राम्रो लाग्दो रहेछ अभै ! त्यसो भए साहिललाई किन छाडेको तैँले ? किन

सुवाससँग बिहे गरेको त ?

****

आभासले आफ्नो सामाजिक सञ्जालमा पहिलोपटक अंशुलाई देखेको थियो । कोहीसँग पूरा जिन्दगीले पुग्दैन, कोहीसँग भने दुई पल नै काफी हुन्छ भनेझैं ऊ आफ्नो विगतका रिलेशनसिपहरूदेखि दिक्क भएको थियो । थाकेको थियो । आफूले चाहेको जस्तो कोही केटी यो संसारमा रहेनछन् भन्ने उसलाई लाग्थ्यो । नत्र त यत्रो वर्ष प्रतिक्षा गर्दा कतै त भेटिनुपर्ने हो । यही पो हो कि भन्ने लागेर केही केटीहरूलाई उसले आफूले सकेको राम्रो गरेकै हो । प्रयास गर्दा पनि उसले त्यस्तो पाएन । ढिलो-चाँडो त्यस केटीले सुरुमा राम्रो बन्न लगाएको मास्क खुल्थ्यो । केही समयपछि त्यस केटीको पूरै व्यक्तित्व नै परिवर्तन हुँदै जान्थ्यो । प्रेम-सम्बन्धको सुरुवातमा हुने केटी पूरै फरक भएर उसलाई कन्ट्रोल गर्ने, म्यानुपुलेट गर्ने, अरूसँग तुलना गरेर जज गर्दै गुनासाहरूको थुप्रो लगाउने मात्र उसले भेटिरहेको थियो । 'जुन जोगी आए पनि कानै चिरेको' जस्तो लाग्न थालेको थियो उसलाई । अब आफ्नो सपनाकी राजकुमारी नखोज्ने र जीवनभर नयाँ कुराहरू सिक्दै समाजसेवा गरेर बिताउने कुरामा लगभग उसले निर्णय गरिसकेको थियो । एक दिन अकस्मात् उसको आँखाअगाडि अंशु आइपुग्छे ।

अंशु । पाँच फिट तीन इन्चकी । यस लोकभन्दा पर कुनै परिलोकबाट आएकी जस्ती ! अत्यन्तै सुन्दर युवती ! उनी

सुन्दर हुनुको साथमा अत्यन्तै समझदार पनि थिई । उसमा रत्तिभर कुनै कुराको अहंकार थिएन । कुनै घमण्ड थिएन । केही कुरा गर्न आफ्नो मुख खोल्थी भने उसको मुखबाट विवेकका कुराहरू मात्र निक्लिन्थे । त्यो सुनेर सबै जना मन्त्रमुग्ध हुन्थे । ऊ केवल सकारात्मक र शुद्ध विचारहरू भएको व्यक्तित्व थिई । यी सबै गुण आभासले अंशुलाई नियाल्ने क्रममा याद गरेको थियो । हुन त ऊ अंशुलाई देख्नेबित्तिकै आकर्षित भइसकेको थियो । आभासका लागि सुन्दर युवती भनेको राम्रो रूप हुनुभन्दा पनि राम्रो मन र सुन्दर आत्मा हुनु हो । बाहिरी रूपमा जस्तोसुकै देखिए पनि आभासलाई फरक पर्थेन । भित्रबाट चाहिँ एकदमै शुद्ध र राम्रो होस् भन्ने सोच्थ्यो । आफैँमा मानसिक रूपले अत्यन्तै बलियो र आत्मविश्वासी होस् भन्ने लाग्थ्यो । जसले आवश्यकता परेका व्यक्तिहरूलाई मद्दत गरेर उनीहरूको मुहारमा मुस्कान ल्याउन सकोस् । जसको मीठो बोली र सुन्दर हाँसो देख्नासाथ उसको सारा पीडाहरू हराएर जाओस् । मनमा आनन्द आओस् । सानासाना कुराहरूमा खुसी हुन सकोस् । यी सबै कुराहरू आभासले अंशुमा पायो ।

उसलाई देख्नासाथ आभासले आफूलाई रोक्न सकेन । दिन-प्रतिदिन अंशुको प्रेममा पर्दै गएको चाल पायो । आजसम्म सामान्य रूपले मात्र बोलिरहेको अंशुसँग आफ्नो मनका सबै कुरा खोल्छु र उसको मनका पनि सबै कुराहरू बुझ्छु भन्ने सोचेर अंशुलाई मनपर्ने रातो गुलाबको फूल लिएर भेट्न गयो । तर कति धेरै कुराहरू गर्छु, उसँग बोल्छु भनेर सोचेको

मानिसले अंशुको छेउ पुग्नासाथ सोचेअनुरूप केही बोल्न सक्दैन । उसको बोली फुट्दैन । तैपनि हिम्मत गरेर बोल्न सुरु गर्छ -

आभास : हेलो अंशु !

अंशु : (पुलुक्क हेर्दै) हेलो आभास !

आभास : (मुस्कुराउँदै) अंशु, तिमीसँग एक्स्ट्रा मुटु छ ?

अंशु : (अचम्म मान्दै) किन ?

आभास : किनभने मेरो मुटु भर्खरै चोरी भयो । तिमीले भर्खरै चोन्यौ !

अंशु : (हाँस्दै) लौ... जे पनि भन्दिने ? हा..हा..हा.. !

आभास : हो के, तिमी त मलाई जादुगर्नीजस्तो लाग्यो ।

अंशु : (फेरि आश्चर्य मान्दै) लौ, किन ?

आभास : किनभने (हाँस्दै) जबजब म तिमीलाई हेर्छु, बाँकी संसार मेरो नजरबाट गायब हुन्छ । जता पनि तिमीलाई मात्र देख्छु ।

अंशु : (लजाउँदै) छ्या ! हा..हा..हा... केके न होला भनेको त, हा..हा..हा... जे पायो त्यही के अब ! (हाँस्छे)

आभास : हो भनेको ! अनि के अंशु, तिमी पहिलो नजरमै हुने प्रेममा विश्वास गर्छौ कि म पर गएर आएर (मुस्कुराउँदै) फेरि तिमीलाई दोस्रोपटक हेरौँ ?

अँशु : (लाजले गाला रातो पार्दै) आबुइ ! हा..हा..हा.. के हो आज ? के भयो ? फुल मूडमा छौ त ! हा..हा..हा.. !

आभास : केही भएको छैन। (एकछिन रोकिँदै) छ नि, अंशु ! हुन त म फोटोग्राफर होइन, तैपनि मैले कस्तो तिमी र म विवाह गरेर (मस्किँदै भन्छ) भित्तामा टाँसिएको हाम्रो फोटो मात्र आँखाअगाडि झल्झल्ती देखिरहेको छु भन्या !

अंशु : (झनै लजाउँदै) लौ ! कस्तो गन्दा सोचेको के। हा..हा..हा.. वी आर जस्ट फ्रेण्ड कमन। हा..हा..हा.. !

आभास : हुन त हो के रे, तर तिमीबाहेक अरू कोही मेरो दिमागमा आउनै छोड्यो भन्या अकस्मात् !

अंशु : (उत्सुक हुँदै) किन त्यस्तो हैं ?

आभास : खै, तर एक्कासि भएको चाहिँ होइन। बिस्तारै नै भएको थियो। केही दिनदेखि भने अति नै हुन थाल्यो। त्यही भएर तिमीसँग मनको कुरा भन्न आएको।

अंशु : के कुरा ?

आभास : के तिमी धार्मिक छौ ?

अंशु : (एकछिन सोचेर) किन र ?

आभास : किनभने मलाई थाहा भइसक्यो कि मेरा सबै प्रार्थनाहरूको उत्तर तिमी नै हौ।

अंशु के भनूँभनूँ भएर लाजले केही बोल्दिन। त्यो देखेर आभास फेरि बोल्न थाल्छ।

आभास : (भावुक हुँदै) म हराइसकेँ अंशु, तिम्रो कल्पनामा। तिम्रो मायामा। बाटो बिराइसकेँ। अब फर्केर आउन सक्तिनँ। तिम्रो मायामा यति पागल भइसकेँ कि अब तिमीबिनाको जीवन कल्पना पनि गर्न सक्तिनँ।

एक्कासि आभासले अंशुको अगाडि घुँडा टेक्छ र आफ्नो खल्तीबाट त्यो रातो गुलाबको फूल निकालेर अंशुतिर बढाउँदै भन्छ, "के अब तिमीले मलाई आफ्नो हृदयमा आउने बाटो देखाउँछ्यौ ?

अंशु : आमा ! (लाजले भुतुक्क हुँदै) कस्तो स्विट...!

अंशुले एकछिन त्यतिकै हेर्छे र लजाउँदै आभासको हातबाट त्यो रातो गुलाबको फूल लिन्छे ।

आभास : (खुसी हुँदै उठ्छ) छ नि, अंशु ! मेरो नम्बर हराएछ । (हाँस्दै भन्छ) के तिमी मलाई आफ्नो नम्बर दिन्छौ ?

अंशु : (खित्का छोड्दै हाँस्दै) आमा, कति जान्ने हो ! हा.हा.हा. ओके लिऊ ।

(फोन नम्बर साटासाट गर्छन् ।)

आभास : (जिस्किँदै) अनि छ नि, अंशु ! तिमीलाई थकाइ लागेको छैन ?

अंशु : (अचम्म मान्दै) किन ?

आभास : किनभने (मुसुक्क हाँस्दै) कति दिनदेखि तिमी मेरो दिमागमा र मनमा कुदेको कुद्यै थियौ । त्यही भएर हा.हा..हा.. (हाँस्छ) !

अंशु : (सँगै हाँस्दै) लौ न नि ! नसकिने रहेछ बोलेर हा..हा..हा.. !

आभास : (जिस्किँदै) हो त नि । थाहा थिएन ? जाम् कफी पिउन ।

अंशु : (उठ्दै) ओके जाम् ।

आभास : मेरो पाखुरा समातेर हिंड न ।

अंशु : किन ?

आभास : (हाँस्दै) किनभने मैले गएर मेरो साथीहरूलाई भन्न सकौं कि मलाई परीले छोएकी थिई । हा..हा.. !

अंशु : छ्या ! हा..हा..हा... !

दुवै जना कफीसपतिर लाग्छन् ।

## भाग १३

सरू : (गहिरो सास लिँदै) खै के भनौं ! अहिले सुवासले यो कुरा सुन्यो भने प्रब्लम हुन्छ । उसलाई यसबारेमा केही थाहा छैन ।

रजनी : लौ ! कहाँबाट सुन्छ उसले ? उनीहरू सबै जना उता छन् र हामीमात्र छौ यहाँ । निर्धक्क भएर भन् । हामी दुई जनाबाहेक कसैले सुन्दैन ।

सरू : (भुइँतिर हेर्दै) खै के भएको थियो कुन्नि ? उसले मलाई छाडेको कि मैले उसलाई छोडेँ, या हामी राम्रोसँग नछुट्टिँदै मैले सुवाससँग विवाह गरेँ, आजसम्म स्पष्ट हुन सकेको छैन म !

रजनी : किन त्यस्तो कन्फ्युजन ?

सरू : (भावुक हुँदै) एकदमै राम्रो थियो हाम्रो रिलेशन । एक-अर्काका लागि नै बाँचिरहेका थियौं । एक-अर्कालाई भरसक खुसी राख्ने प्रयास गर्थ्यौं । ऊ मनको सफा मान्छे थियो । अहिलेजस्तै जिस्किराख्नुपर्ने । त्यही भएर म ऊसँग धेरै खुसी हुन थालेँ ।

सुरुमा उसको त्यही फन्नी नेचर मलाई मन पर्थ्यो। पछिपछि खै किन हो कुन्नि, ऊ पनि अरूको पार्टनरहरूजस्तै गम्भीर र जिम्मेवार भइदियोस् जस्तो लागेर होला या मेरो पार्टनरलाई कसैले पनि हाउडे नभनिदियोस् लागेर होला, ऊ धेरै नजिस्किए हुन्थ्यो जस्तो लाग्न थाल्यो। समय बित्दै गएपछि मलाई ऊ अलि धेरै नै जिस्किन्छ, आफ्नो र हाम्रो लाइफप्रति त्यति सिरियस छैन जस्तो लाग्न थाल्यो। अनि सधैं त्यस्तो भएर जीवन चल्दैन भनेर मैले उसलाई सम्झाउन थालें। 'आफूलाई चेन्ज गर, सिरियस हुन सिक' भनें। ऊ भने सधैं 'म सिरियस नै छु के, समय आएपछि सबै आफैं हुन्छ, अहिलेदेखि टेन्सन लिएर के वर्तमानलाई बिगार्नु भन्दै तर्किन्थ्यो।

केही समयपछि हामीले नोटिस गर्न थाल्यौं, हामी पहिलाभन्दा एकदमै कम एक-अर्कासँग कुरा गर्न थालेका छौं। कुरा गरे पनि अब झगडा मात्रै हुन थालेको थियो। ऊ मैले चाहेको जस्तो बन्न खोज्दैनथ्यो। ऊ जस्तो थियो त्यस्तै मैले स्वीकार्न सकिरहेकी थिइनँ। त्यसैले बोलीपिच्छे झगडा हुन थाल्यो। रिलेशनसिपमा हुँदा पनि 'म एक्लै छु, कोही छैन मेरा भावनाहरू बुझ्ने' जस्तो फिल हुन थाल्यो। पटकपटक साहिलसँग परिराख्ने झगडाले फ्रस्टेसन फिल हुन थाल्यो। हाम्रो त्यो रिलेशनसिप दिन-प्रतिदिन खराबबाट अझै खराब हुन थाल्यो। मलाई जरूरत परेका बेला ऊ मेरो साथमा नभएपछि, मलाई बुझ्न नसकेपछि हामीबीच दुरी बढ्न थाल्यो र ठ्याक्कै एक-अर्कासँग बोल्नै छाड्यौं।

रजनी : (सरूलाई सम्झाउँदै भन्छिन्) आजकाल यस्ता सबै समस्याहरू सामान्यजस्तै भइसकेका छन् लगभग सबै जोडीहरूमा । केटीहरूलाई सबैभन्दा धेरै गुनासो दुईवटा कुराहरूको हुने गर्छ । पहिलो, उसको मसँग आत्मीय सम्बन्ध छैन र दोस्रो, मलाई जरूरत परेका बेला उसले मलाई बुझ्दैन र चाहिएका बेला कहिल्यै साथ हुन्न ।

त्यहीँ अर्कोतर्फ केटाहरूको मुख्य गुनासाहरू अर्कै हुने गर्छन् । पहिलो, केटीहरू बिना कारण यत्तिकै झगडा गर्न सुरु गर्छन् । दोस्रो, जति हुनुपर्ने हो त्यति शारीरिक रूपले सक्रिय हुन्नन् । यस्ता कुराहरू महिला-पुरुष दुवैको मनमा त्यत्तिकै आउँदैन । उनीहरू दुवैले केही कुराहरू नबुझेर आएको हुन्छ ।

सर : (उत्सुक हुँदै) कस्ता कुराहरू ?

रजनी : यहाँनेर हामीले बुझ्नुपर्ने कुरा के छ भने साहिलले त्यस्तो अवस्थामा त्यस्तो प्रतिक्रिया दिनु एकदमै सामान्य हो । सबै पुरुषहरू प्रायःजसो त्यस्तै गर्ने गर्छन् ।

सरू : कस्तो ?

रजनी : उनीहरूले आफ्नो धेरैजसो समय पार्टनर या परिवारलाई दिन्छन् । तनावमा हुँदा या उनीहरूलाई केही समस्या पर्दा भने कहिलेकाहीँ यत्तिकै पनि केही समयका लागि हामीबाट थोरै टाढा हुन्छन् । आफ्ना साथीभाइसँग या कुनै खेल खेल्न या कतै घुम्न या कुनै काममा व्यस्त भएर बस्छन् । केही समय एक्लै बिताउँछन्, रमाउँछन् र फेरि हामीसँग फिर्ता आउँछन् । मानौँ, कुनै लचकदार इलास्टिक

एकछिन तन्किएर आफ्नो सोही स्थानमा फिर्ता आएजस्तो। पुरुषहरूको प्रकृति नै यस्तै हुन्छ। हामी महिलाहरूको भने एक दिन मुड एकदमै ठीक हुन्छ। एकदमै खुसी हुन्छौं। आत्मविश्वासी बन्छौं। फेरि कुनै दिन यत्तिकै हामीलाई हिजोसम्म ठीक लागेका सबै कुराहरू केही पनि ठीक लाग्दैन। के नपुगेनपुगेजस्तो भएर एकदमै 'लो' फिल गर्छौं। त्यही बेलामा नै हामीलाई विगतका सबै नराम्रा कुराहरूसमेत याद आउने गर्छ। यत्तिकै चिड्चिडापन हुन थाल्छ। मानौं, कुनै समुद्रको छालजस्तै माथि-तल। त्यस्तो भएको बेलामा हामी हाम्रो त्यस भावनात्मक छालको तल्लो स्थानमा हुन्छौं र फेरि नर्मल नहुन्जेल त्यहीं केही समय बसी नै राख्छौं। हामी महिलाहरूको प्रकृति नै यही हो।

हो, हामी दुवै महिला-पुरुषले एक-अर्काको यही प्रकृति नबुझ्दा नै समस्याहरू आइरहेका हुन्छन्। पुरुषहरूले कुरा नबुझ्दा 'यत्तिकै टुस्स परेर, हावातालमा रिसाएर, घाँटी फुलाएर बस्छे यो त' भनेर भन्छन्। गुनासो गर्छन् र झगडा पर्छ। सोही कारणले कतिका सम्बन्धहरू बिग्रिएका छन्। त्यस्तै हामी महिलाहरूले पनि पुरुषहरूलाई नबुझ्दा नानाथरी शङ्का-उपशङ्काहरू र पचासथरिका नकारात्मक विचारहरू मनमा ल्याउँछौं। यसले गर्दा सम्बन्धमा अमिलोपन थपिँदै जान्छ।

आजकाल प्रायःजसो पुरुषहरू विभिन्न थरिका मिडियाहरूबाट 'हामीले आफ्नो महिला पार्टनरलाई दुःखी हुन दिनुहुन्न, सकेसम्म सधैं खुसी राख्नुपर्छ' भनेर सिक्दैछन्। त्यही मानसिकताका साथ उसको केटी पार्टनर तनावमा

आएको देख्दा या दुःखी भएको देख्नासाथ पूरा कोसिस गरेर हामी महिलाहरूलाई राम्रो फिल गराउनतिर लाग्छन् । तर उनीहरूले त्यत्रो कोसिस गर्दा पनि हामीले राम्रो फिल गर्न सक्दैनौं । हामी प्रायः भावनात्मक छालको तल्लो स्थानमा हुन्छौं । त्यहाँ केही समयसम्म प्राकृतिक रूपमै बस्छौं । हामीलाई राम्रो फिल गराउन नसक्दा पुरुषहरूलाई नराम्रो लाग्छ ।

उनीहरूलाई लाग्छ, 'मैले यति धेरै कोसिस गर्दा पनि यो दुःखी भएरै बस्छे । सायद मैले यसलाई सुख दिन सकिनँ । यो मसँग खुसी छैन ।' उनीहरूलाई आफ्नो केही कुराको महत्त्व नै नभएको जस्तो लागेर रिस पनि उठ्छ । अनि फेरि झगडा सुरु हुन्छ । हामी कसैलाई राम्रोसँग थाहा हुँदैन, चाहे सबै कुरा एकदमै राम्रो नै किन नहोस्, कहिलेकाहीँ केही समयसम्म लो फिल गर्ने या यत्तिकै निराश या दुःखी बस्ने हामी महिलाहरूको प्रकृति हो । हामीले त्यस्तो गर्छौं भने पुरुषहरू पनि इलास्टिकजस्तै यत्तिकै हामीहरूबाट केही समय टाढा भएर बस्ने गर्छन् । त्यो उनीहरूको प्रकृति हो । यिनै कुराहरू हामीले नबुझ्दा सम्बन्धमा धेरै समस्याहरू आउने र बिग्रने गर्छ । बुझिस्, सरू ?

सरू : (एकदमै सिरियस हुँदै) ओहो, यस्तो पो रहेछ त कारण ! अनि मलाई के थाहा त ? कसैले सिकाएनन् ! (दुःखी हुँदै)

रजनी : (सरूलाई सान्त्वना दिँदै) केही भएन । तँलाई मात्र होइन, यस्तो कुरा धेरैलाई थाहा छैन । त्यही भएर तँसँग भनेको । अनि त्यसपछि के भयो ? तिमीहरू दुई जनाको ?

सरू : (निराश हुँदै) सामान्य मानिसले जस्तै मैले पनि उसलाई सम्झाएँ । सबैले आफ्ना ज्वाइँ गम्भीर र भलाद्मी खोज्छन् नै । मैले मेरो परिवारका बारेमा सोचेर भए पनि आफूलाई परिवर्तन गर भनेँ । उसले मलाई कति फकाउथ्यो ! कुरा अन्तै मोड्ने कोसिस गर्थ्यो । मलाई हँसाउन कोसिस गर्थ्यो । म भने त्यही अघि तिमीले भनेको जस्तै भावनात्मक छालको तल्लो अवस्थामा भएको भएर होला, त्यो दिन मलाई केही ठीक नै लागिरहेको थिएन । त्यसैले नराम्रोसँग झगडा गरेँ ।

उसले जति प्रयास गर्दा पनि मेरो मुड चेन्ज नभएको देखेर ऊ पनि रिसायो र भन्यो, 'यदि तिम्रो समाजले किताबको बाहिरको कभर मात्र हेरेर त्यो किताब राम्रो छैन या राम्रो छ भनेर जज गर्छ भने मेरो यो सानासाना कुरामा खुसी हुने, हाँसिराख्ने र अरूलाई हँसाउने बानीलाई हेरेर मलाई 'हाउडे'को नाम दिन्छ । मेरो पूरै व्यक्तित्व नै हाउडे छ, म लाइफप्रति सिरियस छैन भन्ने सोच्छ । हाउडे हुनुलाई लाजमर्दो कुरा ठान्छ । यदि यस्तो हो भने ठीकै छ । अनि मुख्य कुरा, अरूले के सोच्लान्, के भन्लान् भन्ने कुरालाई लिएर हाम्रो सम्बन्ध र मभन्दा बढी प्राथमिकता दिएर त्यसै कुराबाट तिमीलाई प्रब्लम छ भने मलाई भन्नु केही छैन । म अरू कसैका लागि अरूले खोजेअनुरूप आफू परिवर्तन हुन सक्दिनँ । त्यसो गरेँ भने म आफू कहाँ रहन्छु त ? मेरो पूरै व्यक्तित्व नै हराउँछ । अरूलाई इम्प्रेस गर्ने चक्करमा आफ्ना खुसीहरूलाई बलिदान दिएर म जिन्दगीभर डिप्रेस भएर बाँच्न सक्तिनँ । म जस्तो

छु, एकदमै खुसी छ। मैले जे गर्छु, त्यसमा म एकदमै रमाउँछु। त्यही कुरामा अरूले चाहेबमोजिम परिवर्तन गर्न चाहन्नँ। म आफू आफैँजस्तो भएर बाँचेकोमा एकदमै गर्व गर्छु।' यस्तो भनेर मेरो कुरा नसुनी फन्किँदै गयो त्यो दिन।

सरूले आँखाभरी आँसु पार्दै भन्छिन्।

रजनी : सम्हाल् आफूलाई। विगतबाट दुःखी हुने होइन, पाठ सिक्ने हो। अनि के भयो ?

सरू : हो, तर पनि आँसु निक्लिहाल्यो। आज तैँले मलाई सिकाएको कुरा यदि पहिल्यै सिक्न पाएको भए परिस्थिति अर्कै हुन्थ्यो होला सायद।

रजनी : त्यही त !

सरू : उसका आफ्नै नैतिकता र मान्यताविपरीतका कुराहरू भएका कारण उसले बुझ्न नचाहेको भएर हो या मैले उसलाई बुझाउन नसकेर, थाहा भएन। त्यस दिनबाट मैले धेरै कोसिस गरेँ। उसले त्यस्तो गर्‍यो भन्ने अहंकार मभित्र जागेको थियो। 'त्यसैले म पहिला किन बोलूँ ? म किन झुकूँ ? ह्या ! ऊ आफैँ बोल्न आए मात्र बोल्छु।' म यस्तो सोचेर बसेँ। (लामो सास तान्दै) त्यसपछि न मैले बोलाउने प्रयास गरेँ, न उसले बोलायो। हामीबीचको दूरी बढ्न थाल्यो र हामीमा हाम्रो सम्बन्धभन्दा आफ्नो इगो, घमण्ड ठूलो हुँदै गयो।

रजनी : अनि ?

सरू : मैले 'यस कुराको अन्तिम निष्कर्ष निकाल्छु, टुङ्गो

लाउँछु' भन्ने सोचेर आभासको सहयोग लिने बारेमा सोचें। आभासलाई खोज्दै त्यो दिन म कलेजको क्यान्टिनमा पुगें। त्यही दिन पहिलोपटक सुवाससँग चिनजान भयो। त्यही दिन मैले आभासलाई आफ्ना सबै कुराहरू भनेकी थिएँ। आभासले मलाई सान्त्वना दिँदै भनेको थियो, 'सरू, पीर नलेऊ। जे हुन्छ, झनै राम्रो हुन्छ।'

पछि आभासले साहिललाई सम्झाउन खोजेछ। साहिलले जवाफ दिएछ, 'कुनै सम्बन्धमा आफूलाई मारेर आफू अरू कोही व्यक्ति बन्नुपर्छ भने, जुन सम्बन्धमा त्यसमा भएका व्यक्तिहरू र त्यस नाताभन्दा अरू दुनियाँ कुराले प्राथमितकता पाउँछ भने, आफ्नो पार्टनरलाई जस्तो छ त्यस्तै रूपमा स्वीकार गर्न नसक्ने अवस्था छ भने पार्टनरलाई कन्ट्रोल गर्ने, चेन्ज गर्ने, कम्पेयर गर्ने, कम्प्लेन गर्ने र जज गर्ने गरिन्छ। त्यस्तो अवस्थामा उसले त्यो सम्बन्ध नचाहेको, त्यस्तो रिलेशनसिप नखोजेको भनेर बुझ्नुपर्छ। त्यही भएर अब त्यस रिलेशनसिपको कुनै अस्तित्व नै छैन। त्यसबारे कुरा गर्नु पनि आवश्यक छैन। फेरि मैले सबै कुरा भुलिसकेको छु।'

रजनी : अनि ?

सरू : त्यो सुनेर म एकदमै रोएँ। पछि आभासले मलाई सम्झायो, 'जिन्दगी परिवर्तनशील छ। सधैं एकनाशले केही रहँदैन। परिवर्तनको डरले मानिसको आँखाबाट आँसु निस्कने हो। त्यसैले आफूलाई सम्हाल। यो परिवर्तनको डरलाई आफ्नो जिन्दगी अझै राम्रो बनाउने हतियार मान। परिवर्तनलाई शक्तिका रूपमा विकास गर, सरू !' मैले पनि समयसँगै

आफूलाई सम्हाल्दै गएँ। कसरी आफ्नो जिन्दगी अझै राम्रो बनाउन सकिन्छ भनेर जीवनमा सामना गरिराख्नुपर्ने परिवर्तनहरूलाई सहर्ष स्वीकार्दै आफ्नो शक्तिका रूपमा विकास गर्न थालेँ।

रजनी : अनि सुवाससँग विवाहचाहिँ कसरी भयो त ? म त विदेशमा थिएँ। पढाइ र कामले गर्दा केही थाहा पाइनँ। त्यसबारेमा पनि भन् न।

सरू : केही समयपश्चात् आभासले मसँग भेटेर सुवासले मलाई एकदमै मन पराउने, मनमनै माया गर्ने र सुवास एकदमै असल मानिस भएको बतायो। मैले खोजेको जस्तै हुन सक्ने अर्थात्, 'माइ काइण्ड अफ ब्वाइ' हुन सक्ने भनेर ऊसँग एकपटक भेट्न आग्रह गर्‍यो।

रजनी : अनि ?

सरू : आभासलाई मैले चिनेको धेरै भइसकेको थियो। ऊ एक समझदार र विश्वासिलो मानिस थियो। उसले नचाहिने कुरा गर्दैनथ्यो। त्यसैले आभासले पक्कै पनि केही देखेर नै मलाई सुवाससँग भेट्न भन्दैथ्यो। आभासको विश्वास गरेर म सुवाससँग भेट्न तयार भएँ।

रजनी : अनि ?

सरू : भेट्न त तयार भएँ, तर मेरो मनमा एउटा आशङ्का जाग्यो। सुवास र साहिल पनि मिल्ने साथी भएको त्यति बेलासम्म मलाई थाहा भइसकेको थियो। त्यसैले आभासलाई त्यसबारे भनेँ। आफ्नो मुड चेन्ज गरेँ र 'सुवासलाई भेट्न नसक्ने' बताएँ।

रजनी : अनि के भन्यो आभासले ?

सरू : आभासले साहिलसँग पहिल्यै त्यसबारे कुरा गरेको रहेछ । ऊसँग हाम्रो त्यस सम्बन्धका बारेमा कहिल्यै फेरि चर्चा नगर्ने र सुवासलाई कहिल्यै थाहा हुन नदिने सल्लाह भएको रहेछ । आफ्ना साथीहरूको खुसीका लागि सबै जना 'तँ चुप, मै चुप' भएर विगत भुल्दै चुपचाप बस्ने भएछन् । त्यसपछि मात्र उसले मलाई सुवाससँग भेट्न जान कुरा गरेको रहेछ ।

रजनी : ओहो ! कति बुद्धिमान र समझदार छ है, आभास ?

सरू : त्यही त, एकदमै असल छ ।

रजनी : अनि के भयो ?

सरू : पछि आभासले मलाई त्यो सबै भनेर विश्वास दिलाएपछि म फेरि सुवासलाई भेट्न जाने भएँ ।

रजनी : के भयो भेटमा ?

सरू : मैले धेरै तरिकाबाट सुवासलाई जाँचेँ । उसको मनस्थिति बुझ्ने प्रयास गरेँ । ऊ भित्र र बाहिर दुवैतिरबाट एकदमै स्वच्छ, निर्मल र असल व्यक्ति भएको थाहा पाएँ । मुख्य कुरा मलाई साँच्चिकै एकदमै माया गर्दो रहेछ । उसका कुराहरूबाट यो पनि थाहा पाएँ कि ऊ एकदम समझदार पनि रहेछ । त्यो देखेर म उसबाट इम्प्रेस भएँ । बिस्तारै हाम्रो सम्बन्ध समयसँगै गहिरिँदै गयो । उसको यस संसारमा कोही थिएन । आभासले नै मेरो घरमा पनि कुरा गर्‍यो र उसैको

मद्दतले केही समयपछि हाम्रो विवाह भयो ।

रजनी : ओहो, त्यस्तो पो भएको रहेछ ! अनि के सरू, अहिले चाहिँ तँलाई साहिलको माया लाग्छ कि लाग्दैन हँ ?

सरू : (केही बेर सोचेपछि सानो आवाजमा) साहिल मेरो पहिलो प्रेम थियो । संसारमा म जतासुकै जाऊँ, जोसुकैसँग प्रेम गरूँ या जीवन कटाऊँ, आफूलाई जतिसुकै नराम्रो गरेको भए पनि याद आउँदो रहेछ । लाग्छ, यार ! अझै लाग्छ, मलाई साहिलको माया ।

रजनी : हो सही भनिस् । मलाई पनि याद आउँछ मेरो पहिलो प्रेम, हुन त त्यसले अर्कै केटीका लागि मलाई धोका दिएको थियो । अहिले मेरा डाक्टर श्रीमान्‌ले मलाई संसारकै भएभरका खुसी दिएका छन्, तैपनि त्यस मुर्दारको याद अझै आउँछ, समय समयमा ।

सरू : हो नि यार ! अनि त्यस बारेमा तेरा श्रीमान्‌लाई थाहा छ त ?

रजनी : (मज्जाले हाँस्दै) हा.हा.हा.. के कुरा गर्छेस् यार ! म त्यस्तो खालको 'इमोशनल' मानिस होइन, जसले आफ्ना सबै 'सेक्रेट्स' अरूलाई थाहा दिन्छ । 'आइ एम नट इमोशनल फूल डियर' । किनभने मलाई राम्ररी थाहा छ, ती कुराहरू सुनेपछि पहिला उनीहरूले सहानुभूति देखाउँछन्, तर पछि तिनै कुराहरूलाई हतियार बनाएर हामीलाई घोच्न थाल्छन् । 'जा न त तेरो फलानासँग, मैले फलानाजस्तो गर्न सकिनँ होला नि त । त्यही भएर तेरो चित्त बुझाउन सकिरहेको छैन या त यस्तै भएर त पहिलाकाहरूले तँलाई त्यस्तो गरेका

रहेछन् ! यु डिसर्व दिस् आदि इत्यादि । नानाथरीका घोचपेच सुरु हुन्छ । यो संसारको चलन नै यस्तै छ । त्यसैले मैले यो मात्र होइन, अरू पनि थुप्रै सेक्रेट्स आजसम्म कसैलाई सेयर गरेको छैन ।

सरू : कस्तो ? जस्तै ?

रजनी : (हाँस्दै) के म तँलाई विश्वास गर्न सक्छु ? हा.हा.हा.. !

सरू : पक्का पनि सक्छस् । म पनि त तँलाई गर्छु । हा.हा.हा.. ! त्यसैले पक्का पनि निराश हुने छैनस्, भन् ।

रजनी : आइ नो । हा.हा.हा. मैले तँलाई जिस्काएको । ल सुन्, म एक बाइसेक्सुअल (उभयलिङ्गी) हुँ ।

सरू : (आश्चर्यचकित हुँदै) अनि कसरी ? कहिले थाहा पाइस् यो कुरा ?

रजनी : म स्कुलमा कक्षा ९ मा हुँदा । एक दिन म केटी साथीको घरमा गएकी थिएँ । त्यो बेला त्यस घरमा हामी तीन जना केटीहरू मात्र थियौं । दिउँसोको कुरा हो, साथीका बुबाआमा अफिस गएका थिए । युवावस्थामा भर्खरै पाइला टेकेका हामी सबैमा महिला-पुरुषबीच हुने यौन सम्बन्धका बारेमा जान्ने एकदमै इच्छा थियो । यस्तो प्रायः सबैलाई हुने गर्छ । त्यसैले हामी तीन जनाले मिलेर अश्लिल चलचित्र हेर्न सुरु गर्‍यौं । केही बेर चलचित्र हेरेपछि नै हामीभित्र यौन आकाङ्क्षाहरू जाग्न थाले । सुरुमा हामी आफैंले आफ्नो शरीरका अङ्गहरू छुँदै एक-अर्काको यौनाङ्ग चलाउन कति बेला सुरु गरेछौं पत्तो नै भएन । अनि मजाकमजाकमै म र

मेरो एउटा केटी साथी, जो मेरो नजिकै थिई, चुम्बन गर्न सुरु गर्‍यौँ। बिस्तारै हामीबीच अरू धेरै कुराहरू भए। केही समयपश्चात् यौन इच्छा पूरा भयो।

सरू : केटी भएर केटीसँग त्यस्तो गर्दा केही अप्ठ्यारो लागेन ?

रजनी : अहँ, फिटिक्कै लागेन। बरु आनन्द आइरहेको थियो। त्यस सम्बन्धमा त्यस्तो रमाइलो र आनन्द आएको देखेर पछि मलाई आफैँमाथि शङ्का लाग्यो, 'कतै म समलिङ्गी त होइन ?'

सरू : अनि ?

रजनी : केही महिनापछि मेरो ब्वाइफ्रेन्डले मलाई शारीरिक सम्बन्धका लागि अनुरोध गरिराख्यो, 'केही हुन्न के ! प्रोटेक्सन युज गरेर सुरक्षितसँग गरौँला। सबैले त गर्छन् नि। केही भयो भने म छँदै छु नि। थाहा छ सेक्स गरेपछि हाम्रो माया अझै गाढा र गहिरो हुन्छ रे !' यसरी उसले प्रायःजसो सम्बन्ध बनाउन अनुरोध गरिराख्यो। एक दिन मैले मन नलागीनलागी आफू कन्फर्म हुनुपर्छ भनेर सोचेँ र डराउँदै उसको प्रस्ताव स्वीकारेँ।

सरू : (उत्सुक हुँदै) अनि के भयो ?

रजनी : के हुनु नि ? ऊसँग शारीरिक-सम्बन्ध राख्दा पनि मलाई त्यतिकै रमाइलो लाग्यो र आनन्द आयो। बल्ल थाहा पाएँ, म महिला र पुरुष दुवैसँग शारीरिक सम्बन्ध राख्दा खुसी हुने रहेछु। मलाई अप्ठ्यारो नलाग्ने रहेछ। म एक बाइसेक्सुअल रहेछु। तर हाम्रो समाजलाई यस्तो कुरा

पच्दैन । कसैले पनि सजिलै स्वीकार नगर्ने हुनाले यस कुरालाई मैले गोप्य नै राखेँ । पछि विदेश गएर उतै पढ्ने, काम गर्ने र बस्न गर्न थालेपछि बल्ल म स्वतन्त्र भएँ । मेरा ब्वाइफ्रेन्डहरू आउने-जाने गर्थे मेरो जीवनमा, तर उता गएपछि चाहिँ महिलाहरूसँगै सम्बन्ध राख्ने आफूजस्तै महिलाहरूसँग नजिकिन्थेँ र शारीरिक सम्बन्ध राख्थेँ । यो प्रक्रिया आज पनि निरन्तर चलिरहेको छ । यसबारे कसैलाई थाहा छैन । कसैलाई भन्दा पनि भन्दिनँ । त्यसैले खुसी भएर बाँच्छु ।

सरू : आजसम्म कसैलाई थाहा छैन यस बारेमा ?

रजनी : अहँ, थाहा छैन । एक जनालाई मात्रै थाहा छ ।

सरू : कसलाई ? मलाई ? हा.हा.हा.. !

रजनी : हैन तँबाहेक अर्को एक जनालाई थाहा छ ।

सरू : कसलाई ?

रजनी : थियो एक जना मेरो जीवनमा । लङ डिस्ट्यान्स रिलेशनसिप थियो मेरो । म उतै विदेशमा हुँदा ऊ यहीँ नेपालमा थियो । अरूभन्दा अलि फरक थियो । कुनै पनि बन्धनबिनाको स्वतन्त्र सम्बन्ध चाहने मानिस ।

सरू : (एकदमै उत्सुक हुँदै) को हो त्यो मानिस ?

रजनी : पख, म तँलाई हाम्रो त्यस सम्बन्धका बारेमा उसले लेखेको एउटा कहानी सुनाउँछु ।

सरू : ओहो ! कथा नै लेखेछ कि के हो ब्रोले ? हा..हा..हा.. !

रजनी पनि सँगै हाँस्छे ।

रजनी : ल सुन् ।

मेरो एक्लोपनले आजभोलि मलाई भन्ने गर्छ, 'अब मलाई नै माया गर । म त धोकेबाज छैन नि । किनभने कति मानिस जिन्दगीमा यसरी आउँछन्, जसरी युट्युवमा ५ सेकेन्डको विज्ञापन । तर ५ सेकेन्डपछि नै इरिटेड हुन थालेर बाध्यतावश स्किप गरिदिनुपर्‍यो । उसले मलाई बेबी भन्थी, त्यसैले होला थाङ्नामै सुताएर गई ।

कुरा तीतो छ तर सत्य हो । सारा दुनियाँलाई 'ब्लर' गरेर जसमाथि हामीले 'फोकस' गर्छौं नि, त्यसैले पछि बिना कुनै ठूलो कारण आफ्नो जिन्दगीबाट हामीलाई 'क्रप' गरिदिन्छ ।

आज म त्यस्तै एउटा कहानी सुनाउँदैछु, जसमा म छु अनि मेरो साथमा उनी । केही समय अगाडिदेखि नै सामाजिक सञ्जालहरूमा लाइकहरू साटासाट गर्दा नै एक-अर्काप्रति आकर्षित भइसकेको अवस्था रहेछ । तर दुवैको मनस्थितिदेखि दुवै जना अन्जान थियौं । एक दिन अकस्मात् च्याटमा कुराकानी सुरु भयो हाम्रो ।

उनले सोधिन्, 'कता बस्छौ ?'

मैले मनमनै भनें, 'आफ्नै मनमा त हेर्नै बिर्सिछ मोरीले ।'

मुखले चाहिँ अर्कै भनें, 'काठमाडौं । अनि तिमी ?'

उनले उत्तर फर्काइन्, 'युरोपमा ।'

म : ए ! के जब गरिरहेको ?

उनी : अहँ । सुरुमा नेपालबाट आउँदा चाहिँ जागिर गर्न नै आएको, तर यहाँको नियम अनुसार पढ्दा पनि काम

गरेसरह नै तलब सुविधा दिने भएकोले नर्सिङ पढिराछु ।

म : ए हो, कति मजा ! पढ्दा पनि पैसा पाउने है ! नेपालमा पनि त्यस्तो भएको भए सबैले पढ्थे होला है ?

ऊ : अँ त है... हा..हा..हा.. ! अनि तिमीचाहिँ के काम गर्छौ ?

म : म यस्तै आफ्नो लाइफलाई सम्हाल्ने कोसिस गर्दैछु भनौं ।

ऊ : बुझिनँ ।

म : कोही मानिस साह्रै मन पर्न थालेको छ, तर कसैको लाइफमा बस्नुभन्दा पहिले आफ्नै लाइफलाइनमा ल्याउनु छ ।

ऊ : अरे वाह... कस्तो राम्रो सोच !

त्यो दिनपछि हाम्रो च्याटको कुराकानी कति बेला भ्वाइसकल हुँदै घण्टौं-घण्टा भिडियो कल गर्ने भइसकेछ पत्तो नै पाइएन । तपाईं, तिमी हुँदै कति बेला एकदमै नजिकैको ठानेर दुवै जनाले एक-अर्कालाई 'तँ' भन्ने सम्बन्धमा बाँधिएछौं ।

आफ्नो अनुहार त मलाई ऐनामा पटकपटक हेरिराख्नुपर्छ भने कसरी विश्वास गर्थें उसलाई मैले आँखा चिम्लिएर ? सयवटा स्यालहरू मरेपछि बल्ल त्यो स्याल अर्थात्, उसको जन्म भएको जस्तो पूरा देश खाएर शेष पल्टेकी, एकदमै बाठी थिई ऊ । तर सबै बाउको पनि बाउ हुन्छ भनेको जस्तै म पनि बाख्रा चराएर होइन, मान्छे नै चराएर त्यो उमेरसम्म पुगेको थिएँ । उसले जतिसुकै मलाई सिसामा उतार्ने प्रयास

गरे तापनि सुरुका केही समयपश्चात् नै मैले उसको मनस्थिति पढ्न थालेको थिएँ। मेरो मनस्थिति पढ्न ऊ पनि सफल भएकी थिई। उसको मनस्थिति स्वच्छ नभएको मैले चाल पाएँ। तैपनि उसलाई केही भनेको थिइनँ। आँखाअगाडि हुँदा उसले चाहे अनुसार भइदिन्थेँ। उसले सुन्न चाहेका कुराहरू बोलिदिन्थेँ। उसलाई सकेको हँसाउन र खुसी राख्न कहिल्यै पछि पर्दैनथेँ। तर ऊ ३-४ दिनसम्म घुम्न जान्छु भनेर गायब भई भने पनि एकपटक पनि कल गर्दिनथेँ। किनभने अलिकति या अलि धेरै समय लागे पनि म मानिस चिन्न सक्थेँ। त्यही भएर जेसुकै गरोस् भन्ने मनशायले उसलाई पूर्ण रूपमा खुल्ला छाडिदिन्थेँ।

ऊ ३-४ दिन आफ्ना गँजेडी साथीहरूसँग घुमेर रमाइलो गरेर थाक्थी र फर्केर भिडियो कलमा भन्थी, 'तँ अचम्मको छस् है ? तेरो ठाउँमा अरू कोही केटा भएको भए कहाँ गएको थिइस्, कोसँग छस्, खै भिडियोमा देखा भनेर ल्याङल्याङ गरेर हैरान गर्थ्यो होला। मेरा पहिलाका ब्वाइफ्रेण्डहरूले त्यस्तै गर्थे। तैँले त मलाई कस्तो मज्जाले 'स्पेस' दिन्छस्! तँ कति समझदार छस्! त्यही भएर आइ लव यु एकदमै धेरै' भनेर पहिला भावनात्मक हतियार चलाउँथी। त्यो 'भावना' भन्ने चरो मभित्रबाट भने उसको असलियत थाहा पाएकै दिन फुर्र उडिसकेको थियो। त्यसैले म प्रायः उसका कुराहरूमा कुनै विशेष प्रतिक्रिया देखाउँदैनथेँ। उसको आँखामा हेरेर मुसुमुसु हाँसेर मात्रै बसिदिन्थेँ। उसका घाँसफुस कुराहरू सुनेर मनमनै भन्थेँ, 'फेक फेक ! म लपेट्दै गर्छु। कतिसम्म

गर्दा रहेछन् हेरम् न !'

ऊ पनि तँ र मजस्तै स्याल थिई । मेरो मनस्थिति बुझेरै समयसमयमा बच्चाजस्तै बनेर त्यस्तै आवाजमा भन्थी, 'अनि छ नि, बेबी ! तैँले मलाई साँच्चैको माया त गर्छस् नि है ? कि आफ्नो कथाका लागि एउटा पात्र मात्र सोचेर ममाथि रिसर्च गरिरहेको छस् ?'

यो कुरा पहिलोपटक सुन्दा त झसङ्ग भएँ । मलाई लागेको थियो, 'ओहो ! यो खतरा स्याल भनेको त स्यालभन्दा पनि खतरनाक ब्वाँसो पो रहिछ बाइ... हा...हा...हा... लौ न ! कस्तो थाहा पाएकी मुर्दानीले !'

हामी दुवै जनाले 'तँभन्दा म के कम' भन्दै एक-अर्कालाई मजाले चाट्न सुरु गरिरहेका थियौँ । कसले कसलाई चाटिरहेको छ भनेर चाहिँ थाहा थिएन ।

मलाई एक जना नेपाली लेखकले आफ्नो किताबमा 'जब गुमाउनका लागि केही पनि हुन्न, तब गर्नका लागि धेरै कुरा हुन्छ' भनेको याद आयो । हाम्रो सम्बन्धमा पनि मैले गुमाउनुपर्ने केही थिएन । त्यही भएर ऊसँग धेरै कुराहरू गर्न थालेँ । आफ्नो नयाँ कथाको पात्रको अर्थात्, उसका विभिन्न प्याटर्नहरू सिक्न र बुझ्न थालेँ । त्यसैले म पनि ऊजस्तै बच्चा भएर उसले भनेबमोजिमको मानिस बनेर प्रस्तुत हुन थालेँ ।

ऊ : बेबी ! तैँले मलाई साँचो माया गर्दैनस् हौ ? कहिल्यै अरूले जस्तो 'तिम्रा लागि आकाशको तारा झार्छु' भन्दैनस् त !

म सोच्थेँ, 'ओहो ! यसको कुरा नसिकिने बाबा !'

तैपनि मुखले चाहिँ भन्थेँ, 'माया त छ नि, तर गफाडी होइन म ! घरको माकुराको जालो त झारेको छैन मैले । त्यसैले तेरा लागि आकाशको तारा झार्छु भन्दिनँ म !'

ऊ : उफ् ! तेरो कुरा सुन्लान् अरूले ! भित्ताको पनि कान हुन्छ रे ! बिस्तारै बोल्, हा..हा..हा.. !

म : भित्ताको पनि कान हुन्छ भने ठीकै छ नि त, बेबी ! म खोजेर त्यसमा झुम्का लगाइदिऊँला ।

ऊ : हा..हा..हा.. तँ गधा कति क्युट छस् थाहा छ ?

म : हो र ? यस्ता मीठामीठा कुराहरू नगर न, बेबी ! मेरो दाँत किराले खान्छ, हा..हा..हा.. !

ऊ : हा..हा..हा... कस्तो छस् है तँ ? बोलेर चाहिँ सकिन्नँ । बरु यो भन्, तैँले ममा त्यस्तो के देखिस् र प्रेम गरिस् ?

म : (केही बेर सोचेर) जुन दिन तँलाई देखेँ, बेबी !

ऊ : (उत्सुक हुँदै) अनि ?

म : भूतको फिल्ममा तँलाई किन राखेनन् भन्ने सोच आयो, हा..हा..हा..!

ऊ : हा..हा..हा... पापी !

म : हो भन्या ! तँ खाली मैले तँलाई माया गर्छु कि गर्दिन भन्दै बस्, बोक्सी ! मचाहिँ मायाले तँलाई कर्के नजरले हेर्दाहेर्दै डेरो हुन लागिसकेँ । तँलाई अत्तोपत्तो छैन ।

ऊ : हा..हा..हा... !

म : बेबी ! तिमी गाँजाको बारीमा जन्मेकी थियौ कि के

हो ? तिमीलाई हेर्नेबित्तिकै म लठ्ठै हुन्छु त !

ऊ : हा..हा..हा... !

म : बेबी ! तिम्रो र मेरो माया बसेको देखेर दुनियाँ जलेको छ । त्यही भएर यार, आजकल गर्मी धेरै बढेको छ ।

ऊ : इस् हो ! हा..हा..हा..!

म : हरे ! कस्तो नपत्याएकी तैंले ? उफ्, जिन्दगीमा सोचेजस्तो केही नहुने भन्या ?

ऊ : किन ? के भयो ?

म : यार ! आज शनिबार होला भनेर सोचेको त बिहिबार पो रहेछ, हा..हा..हा.. !

ऊ : हा..हा.. ! अनि सुन् न, आज त ग्रहण लाग्ने दिन रे ! खानुहुन्न त्यो बेलामा भन्छन् । ग्रहण लागेको बेलामा केही खायो भने के हुन्छ बेबी ?

म : बिहान 'गु' आउँछ, बेबी !

ऊ : हा..हा.. ! नकरा, भन् न के !

म : के थाहा मलाई ? थाहा नहुने कुरा सोधेपछि के भन्नु त !

ऊ : त्यति जाबो नि थाहा नहुने मान्छे !

म : ए त्यस्तो पो ! तँलाई चाहिँ सबै थाहा छ होइन ? त्यसो भए भन् त... पत्रिका र रेडियोमा के फरक छ ?

उ : (केही बेर सोचेर) पत्रिकामा चटपटे खान मिल्छ, तर रेडियोमा मिल्दैन । हा..हा..हा.. !

म : अँ, खुब जानिस्, हा.हा.हा. !

यस्तै गर्दागर्दै एकबाट दुई, दुईबाट चार महिना पुगेछ त्यो सम्बन्ध गाँसिएको । यही क्रममा मैले उसलाई एक दिन सोधेको थिएँ -

म : तेरो फ्युचर प्लान के छ, बेबी ?

ऊ : (केही बेर सोच्दै) एउटै कुरा छ मेरो दिमागमा । यति धेरै पैसा कमाउनु छ कि पैसा देखेर म यो सोच्न बाध्य बनूँ, बैंकखाता खोलूँ या बैंक नै खोलूँ !

म : ओहो ! किन त्यस्तो ?

ऊ : किनभने मैले संसार देखेकी छु । तैँले पैसा बना डियर, सम्बन्ध मानिसहरूले आफैँ बनाउँछन् ।

एकदमै सत्य भनेकी थिई उसले । हुन पनि हो, आजकाल पैसाभन्दा ठूलो केही लाग्दैन मानिसलाई । बाँकी सबै भन्ने कुराहरू मात्र हुन् । त्यही दिन मैले उसको पैसाप्रतिको झुकाव महसुस गरेँ । नबुझ्दै प्रेम हुने हो, बुझेपछि त ब्रेकअप हुन्छ भन्ने लाग्यो । त्यो दिन नै उसलाई ब्रेकअप दिने सोचिसकेको थिएँ । तर भ्यालेन्टाइन डे नजिक आइरहेको थियो । त्यो एउटा प्रेम-सम्बन्ध टुटेर के भयो त ? ऊ अझै पनि मेरो राम्रो साथी थिई । उसले त्यतिबेलासम्म मलाई गरेका राम्रा कुराहरू सम्झेर चुपचाप बसेँ । केही हप्तापछि आउने भ्यालेन्टाइन डेमा उसलाई विस गरेर आफ्नो बाटो लाग्ने निर्णय गरेँ । म यता त्यस दिनको प्रतिक्षा गर्दै आफ्नो काममा व्यस्त हुन थालेँ ।

हामी बोलिराख्दा नै उसको जीवनमा अर्को एक जना व्यक्तिले प्रवेश गरिसकेको थियो । त्यस व्यक्तिसँग ऊ लगानी गर्न र मुनाफा कमाउन सिक्दै थिई । उसले राम्रै मुनाफा कमाइरहेकी पनि थिई । भाग्यवश ऊ त्यो व्यक्तिसँग नजिकिन थाली । त्यो युवकले डाक्टरी पढ्दै राम्रो कमाइ पनि गरिरहेको थियो । ऊसँग भौतिक रूपले पनि नजिक थियो ।

एक दिन ऊ मसँग फेस गर्न नसक्ने गरी आफ्नो नजर लुकाइलुकाइ बोलिरहेकी थिई । मैले केही थाहै नभएको जसरी सुनिराखेँ । सामान्य प्रतिक्रियाहरू मात्र दिइराखेँ । किनभने ३-४ दिनपछि नै भ्यालेन्टाइन डे थियो । त्यसबेला उसले मलाई सानो आवाजमा सोधेकी थिई -

ऊ : ओइ, तेरो विचारमा माया के हो ?

म : पहिले माया अन्धो थियो । पछि मान्छेहरूले त्यसको आँखाको उपचार गरिदिए । अनि अहिले मायाले गाडी, घर, अनुहार, बैंक ब्यालेन्स सबै देख्छ ।

त्यो सुनेर ऊ जवाफविहीन भई । कुरालाई अन्तै मोड्दै भनी -

ऊ : आज त एकादशी हो के रे ! केही खाइस् कि व्रत हो तेरो ?

म : खाएँ टन्न । किन बस्नु म व्रत ? बरु तँ बस्छेस् होला नि पछि तीजमा 'उहाँको राम्रो होस्, आयु बढोस्' भन्दै ?

ऊ : को उहाँ ?

म : जसले तँसँग विवाह गर्छ ।

ऊ : बस्दिनँ। किन बस्नु ! एउटा व्रत बसेर अर्काको राम्रो होस् या उमेर बढोस् भन्नु नोकिया मोबाइलको चार्जरले आइफोन चार्ज गर्नुजस्तै हो। हा..हा..हा.. !

म : सही हो, सही हो। हा.हा.हा.. !

भ्यालेन्टाइन डेको दिन मैले मेरो एक जना बहिनीको सहायताले उसले चाहेकै एउटा गिफ्ट र कार्ड पठाएँ। उसलाई विस गरेर म आफ्नो बाटो लागेँ।

त्यो दिनभन्दा अगाडिदेखि नै उसले नबोलाए म नबोल्ने र मैले नबोलाए ऊ नबोल्ने भइसकेको थियो। हामी दुवैलाई हाम्रो सम्बन्ध भन्दा आ-आफ्नो 'इगो' प्यारो हुन थालिसकेको थियो। मैले पनि पहिल्यै लिएको निर्णय अनुसार ऊ जेमा खुसी छे, त्यसमै छाडिदिएँ। बोल्ने प्रयास नै गरिनँ।

हाम्रो 'माया' हावासरी थियो। त्यो हावा पूर्ण रूपले दूषित थियो भनेर चाल पाएपछि ऊसँग बोल्नुको कुनै औचित्य थिएन। उसले जे गरी, एकदमै ठीक गरी। उसको लाइफ, उसैको च्वाइस, नो कमेन्ट। सायद म पनि उसको ठाउँमा भएको भए त्यही नै गर्न सक्थेँ। जुन रूखमा धेरै फलहरू लागेका छन्, त्यसैमा चढ्न सक्थेँ। तर त्यो सम्बन्धबाट मैले कसैको मुहारको हाँसो बनेमा खुसी मात्र होइन, सन्तुष्टि पनि मिल्दो रहेछ भनेर सिक्ने मौका पाएँ। मैले उसलाई आफूले सकेको हँसाउन कुनै कमी बाँकी राखिनँ।

मेरो खल्तीमा सानो प्वाल मात्र के परेको थियो, सिक्काहरूभन्दा धेरै मेरा आफन्तहरू हराइसकेका रहेछन्। अनि आफ्नैले सिकाइरहेका रहेछन् कोही पनि आफ्ना हुँदैनन्

भनेर ।

धेरै पछि त्यो मोरीले एक दिन फोन गरी । धेरै खुसी भएर मैले फोन उठाउनै भुलैं भन्या ! त्यसपछि आजसम्म गरेकी छैन पापीले ! अनि उसले म्यासेज गरी, 'तैँले मजस्तो कोही भेट्दैनस् बुझिस् ।'

मैले नि भनिदिएँ, 'थ्याङ्क गड ! हा.हा..हा.. !'

आवश्यकभन्दा धेरै 'समय' र 'इज्जत' दिंदा मानिसहरूले हामीलाई सस्तो सम्झिने रहेछन् । ऊसँग पनि मैले त्यही गरेको थिएँ । सुरुमा रातभर आफू नसुतीनसुती उसलाई समय दिन्थें । बच्चालाई जस्तो माया गर्थे । पछि पो चाल पाएँ, उसले त मलाई सस्तो सम्झेर घुमाइरहेकी थिई ।

म गरिबको मायाले कसरी ठाउँ पाओस् उसको मुटुमा ? त्यहाँ त महलका अनेकौं सपनाहरू सजिएका रहेछन् । प्रेम थिएन भने पहिले नै भनिदिएको भए हुन्थ्यो नि । म पनि उसको नम्बरलाई 'लाइफ लाइन' नभनी 'टाइम पास' भनेर आफ्नो मोबाइलमा सेभ गर्थे नि । दृष्टिविहीनलाई ऐना र खुट्टा नहुनेलाई जुत्ता दिएजस्तै भयो ऊप्रति मेरो माया । जसको मुटु ढुङ्गाको थियो उसैलाई फूल सम्झी सजाएँ ।

ब्रेकअप भएको पक्कै होइन । तैपनि हाम्रो बोलचाल समेत हुँदैन । ऊ पनि बाँचेकै छे, म पनि बाँचेकै छु । फरक यति हो कि ऊ कसैको साथमा अनि म आजसम्म पनि उसैको यादमा । खुसीलाई हतार थियो, ऊ रोकिएन । पीडालाई फुर्सद थियो, जा भन्दा नि गएन । यस्तै छ, डियर जिन्दगी !

जेहोस्, ऊ एकदम मजाकी केटी थिई । तैपनि विचार गर्नुपर्ने रहेछ, कसैसँग दिनरात फोनमा बोल्दैमा, च्याट गर्दैमा उसले माया र केयर गरिरहेको छ भनेर सोच्छौं भने हामी गलत छौं । उसले हामीलाई समय बिताउने साधन बनाइरहेको छ भनेर बुझ्नुपर्ने रहेछ । भोलि ऊसँग आफू नहुँदा उसले अर्कैसँग उसैगरी समय बिताइरहेको देख्दा नमज्जा लाग्न सक्छ । त्यसैले कोहीसँग पनि हदैसम्म बोलम्, तर हैसियतभन्दा माथि नबोलम् । अनि याद राखौं, कुनै बेलाको हाम्रो 'साँचो प्रेम' आज अरू कसैको 'साँचो प्रेम' हुन सक्छ ।

रजनीले त्यो पढेर सकी र केही बोल्नका लागि आफ्नो मुख के खोलेकी मात्र के थिई, पछाडिबाट साहिलको आवाज आउँछ ।

साहिल : ओइ, तिमीहरू अरूको कुरा काट्न छाडेर आलु काट त ! राति अचार खान पाइन्छ ।

तीनै जना मज्जाले गललल हाँस्छन् ।

# भाग १४

अंशु : मेरो कति माया लाग्छ ?

आभास : एकदमै धेरै । तिमी रोएको पल तिम्रो आँसु पुछ्न नसकूँला, तर काउकुती लाएरै भए पनि तिमीलाई हसाँउन पक्कै सक्छु म ।

अंशु : आम्मै नि ! कस्तो क्युट ! मैले तिमीले सक्छौ भनेर थाहा पाइसकेँ ।

अंशु र आभासको सामाजिक सञ्जालमा कुरा गर्ने क्रम बाक्लिँदै थियो । सुरुसुरुमा उनीहरूको जीवन विज्ञान, ध्यान, योग, भावना आदि कसरी नियन्त्रण कसरी गर्ने भन्ने विषयमा धेरै कुराहरू हुन्थ्यो । अनुभव र उमेर दुवैले अंशुभन्दा सिनियर भएको हुनाले आभासले आफूलाई थाहा भएको कुरा सिकाउँथ्यो, बुझाउँथ्यो । त्यही भएर अंशुले आभासलाई 'कोच' भनेर सम्बोधन गर्थिन् । उनीहरू एक-अर्काको साथ पाउँदा यति धेरै खुसी हुन्थे र रमाउँथे कि त्यसको कुनै सीमा नै थिएन । नकारात्मक ऊर्जा या अरूको त कुरै हुन्थेन, किनभने उनीहरू दुवैलाई एक-अर्काको कुरा निकै ध्यानपूर्वक सुन्न र बोल्नबाहेक अन्त

दिमाग नै जाँदैन थियो । दुवै जना एकदमै धेरै हाँस्थे । खुसी हुन थालेका थिए एक-अर्कासँग । यो सम्बन्ध दिन-प्रतिदिन झन्झन् गहिरो र गाढा हुँदै थियो । बडो अचम्मको कुरा त के थियो भने दुवै जना एक-अर्काको मनको कुरा बुझ्न सक्ने भइसकेका थिए । त्यही भएर दुवैले एक-अर्काका सानासाना कुराहरू नोटिस गर्न थालिसकेका थिए । कसरी एक-अर्कालाई अझै धेरै खुसी राख्न सक्छौं भन्ने कुरा हरेक दिन सोच्न थालेका थिए ।

अंशु : छ नि, मलाई तिमीले आफ्नै हातले सधैं मेरा लागि लेखेका 'प्रेमपत्रहरू' जम्मा गरेर राख्न मन छ नि !

अंशुले त्यति मात्र के बोलेकी थिई, उसलाई खुसी बनाउन आभासले त्यही दिनदेखि हरेक दिन आफ्नै हातले कपीमा प्रेमपत्र लेख्दै दिन थाल्छ । यो देखेर अंशुको खुसीको सीमा नै रहन्न । उनीहरू एक-अर्कालाई खुसी राख्न सानासाना प्रयासहरूलाई निरन्तरता दिँदै जान्छन् । यसले गर्दा त्यो सम्बन्धलाई छोटो समयमै अर्कै लेबलमा पुऱ्याउँछ ।

आभास : छ नि, माया ! तिमी मेरो लाइफमा आएर होला, आजकाल त प्याज काट्दा पनि आँसु आँउदैन त ! के हो अब मेरो खप्परमा खुसी नै खुसी मात्र लेखेको छ कि क्या हो ?

अंशु : (हाँस्दै) त्यही त है ? देख्यौ नि, मेरो माया कति शक्तिशाली छ ? बल्ल चाल पाउन थाल्यौ ? हा.हा..हा.. !

आभास : अँ त नि ! अहिलेको पलमा बाँच्ने भएर होला कति कुरा याद नै हुन्न । कति कुराहरू ढिलो पनि बुझ्छु, माया ! ट्युबलाइट के, माया ! मेरो दिमागको बत्ती पिलिक्पिलिक्

गर्दै बल्ल ढिलो पिलिक्क बल्छ । हा..हा..हा.. !

अंशु : हा..हा..हा.. ! साँच्चै हो ?

आभास : हो नि, अनि तिमी के गरिरहेकी, माया ?

अंशु : जापान, टोकियो, माया ! तिमीलाई सम्झीसम्झी चिया पकाएको सबै पोखियो । हा..हा.. !

आभास : लौ ! हा..हा.. थाहा छ, यो संसारमा तिमी मात्र एउटा मानिस हौ, जोसँग म बोलेर जित्न सक्तिनँ । आज हरेक साससँगै तिम्रो याद आइरहेको छ । यो सोच्न सकिरहेको छैन मैले कि तिम्रो याद रोकूँ या मेरो सास । म चाहन्छु, हाम्रो सम्बन्ध पनि इरेजरवाला पेन्सिलजस्तै होस् । जुन हामीसँग सधैँ होस् । अनि एउटाले गल्ती गर्दा अर्कोले सच्याइदेओस् । मैले सोच्थेँ, मेरो जिन्दगीमा सबैभन्दा धेरैपटक हुने भनेको मैले सास फेर्नु हो । तर म गलत रहेछु, माया ! त्योभन्दा त कति धेरै म तिमीलाई याद गर्दो रहेछु । मलाई सम्बन्धको हरेक कुरा तोड्नु छ । एकपल्ट तिम्रो छातीमा शिर राखेर कुनै दिन यो दुनियाँ छोड्नु छ ।

अंशु : (लजाउँदै) अँ होला, मैले पत्याइसकेँ के रे । हा..हा..हा.. !

आभास : वाह, वाह ! पत्यायौ ? त्यसो भए आऊ अब, तिमीलाई म तक्मा लगाइदिन्छु ।

अंशु : नाइँ, हा..हा.. ! तिमी आफैँ राख । म भोलिपर्सि एकैपटक लिन्छु मेरा तक्माहरू ।

आभास : हे भगवान् ! बोरा भरिन्छ होला त्यति बेलासम्म त, माया ! बोराभरी तक्मा लगेर किलोको हिसाबमा बेच्ने

योजना हो तिम्रो 'तक्मा लिनुस्, तक्मा लिनुस्, पाँच रूपैयाँ किलो' भन्दै ?

अंशु : हो नि ! कस्तो ठ्याक्कै थाहा पाएको ।

दुवै जना एकैपटक हाँस्छन् ।

# भाग १५

सुवास र सरूको विवाह भएको सुहागरातको दिनको कुरा हो । रातको समय सुवास आफ्नो बेडमा बसेर मोबाइल चलाउँदै थियो । त्यत्तिकैमा सेक्सी नजरले ढोकाबाट आफ्ना श्रीमान्लाई हेर्दै सरू त्यहीँ टक्क अडिन्छे । आफ्नो शरीरमा लगाएको माथिको भित्रीवस्त्र खोलेर फुत्त भुइँमा झार्छे र सेक्सी आवाजले सुवासतिर हेर्दै भन्छे -

सरू : थाहा छ नि, अब के गर्नुपर्छ ?

सुवास : (एकछिन सोचेपछि आफ्नी बूढीको मुखमा हेरेर अचानक ठुस्किँदै भन्छ) इस्, गर्छु ! यति राति त मरे नि गर्दिनँ । यत्रो नि धुन्नँ, यति राति त कपडा !

त्यो सुनेर सरू मुर्छा पर्ने गरी हाँस्छे र भन्छे -

सरू : हरे, कति ग्वाँच हो ! कसले धुन भन्यो र कपडा ?

"ओइ, सुवास ! ओइ, के एक्लै टोलाउँदै मस्किरहेको ? यहाँ आइज, मलाई हेल्प गर् । झिरमा मासु हाल् । रात पर्न लागिसक्यो !" आभासको आवाजले सुवास झस्याङ्ग हुन्छ र आफ्नो विगतको कुरा सम्झेर फेरि हाँस्न थाल्छ ।

राति मासु पोलेर खाने भनेर आभास हतारहतार मासुलाई भिरमा उन्दै थियो । सुवास एक्लै हाँसिरहेको देखेर ऊ फेरि भन्छ -

आभास : ओइ, एक्लै हाँस्दै छस् त ! के सम्भिस् ?

सुवास : केही होइन । यत्तिकै मेरो र सरूको पहिलाको कुरा याद आयो यार !

आभास : ए अनि कस्तो चल्दै छ त तेरो वैवाहिक जीवन आजकाल ?

सुवास : खै ? के भनूँ, यार ! एक्लै जीवन बिताइरहेको छु । मलाई पहिलाभन्दा त मुश्किल नै छ ।

आभास : किन ?

सुवास : चित्त बुभाउनै गाह्रो उसलाई, यार ! अभै सबैभन्दा मुश्किल त त्यति बेला हुन्छ, जब उसले सोध्छे, 'सब्जी कस्तो छ ?' नमीठो भनूँ, रिसाउँछे । थर्काउँछे पनि । मीठो भनूँ, थपिदिन्छे ।

आभास : हा.हा.हा... गधा ! जिन्दगी खुसीसाथ बिताउने हो भने कति कुराहरू भुलिदिनुपर्छ यार !

सुवास : (गम्भीर हुँदै) सानो थिएँ । सबै कुरा भुल्ने गर्थें । संसारले भन्थ्यो, 'याद गर्न सिक् !' ठूलो भएँ । अब हरेक कुरा याद छ, तर अब संसारले भन्दैछ 'भुल्न सिक्' ।

आभास : (भिरमा मासु उन्दै) संसारको मतलब गर्नुहुन्न । विश्वास पनि गर्नुहुन्न । संसारले नै 'प्रतिक्षाको फल मीठो हुन्छ' भनेर भन्छ, तर तँ केही काममा असफल हो या

अलिकति मात्र समय लगा त ! फेरि त्यही मानिसहरू आएर भन्छन्, 'किन त्यस्तो गरिस् ? समयले कसैलाई पर्खंदैन भनेर थाहा छैन ?' त्यसैले अरूको कहिल्यै नसुन् । आफूलाई ठीक लाग्ने कुरा याद राख् । काम नलाग्ने कुरा बिर्सी भनेको, उल्लु !

सुवास : ए बुझें । अनि सुन् न, आभास ! रिलेशनसिपलाई मैले राम्ररी बुझ्नै सकिरहेको छैन भन्या ! अलि सजिलो तरिकाबाट भन् न रिलेशनसिप के गर्दा राम्रो हुन्छ ? फेरि एकपटक भन् न । अघि तेरो कुरा सुनेपछि कस्तो मन छोयो । ती कुराहरू मेरो रिलेशनसिपमा पनि भइरहेको भएर ।

आभास : (केही बेर सोचेर) हामी मानिस जब कसैको कुरा सुन्छौं, हाम्रो दिमागमा सिर्फ एउटै कुरा चल्छ, 'कति बेला अगाडि बोलिरहेको मानिसको कुरा सकिन्छ र हामी त्यसको जवाफ दिऊँ !' अर्थात्, हामी कहिल्यै आफ्नो अगाडिको मानिसको भावना बुझ्ने कोसिस नै गर्दैनौं । यही कुरा प्रायः हामी सबैले हाम्रो रिलेशनसिपमा पनि लागु गर्छौं । हामी हाम्रो पार्टनरको कुरा त सुन्छौं, तर कहिल्यै पनि उनीहरूको भावनाहरूलाई बुझ्ने प्रयास नै गर्दैनौं ।

सुवास : कसरी आभास ?

आभास : आइज । यसलाई हामी व्यावहारिक रूपमा बुझौं ।

सुवास : ओके ।

आभास : मेरो साथी अजयले एक दिन आफ्नो नयाँ गाडी सफा गरिरहेको थियो । उसको चार वर्षको छोरा त्यहाँ

आयो र ढुङ्गाले त्यो नयाँ गाडीमा कोर्न थाल्यो ।

आफ्नो नयाँ गाडीलाई त्यस्तो गरेको देखेर अजयलाई छोराको त्यस हरकतमा एकदमै रिस उठ्छ । केही बुझ्ने प्रयास नै नगरी रिसको झोँकमा उसले छोराको हातमा 'अब त्यस्तो गर्छस् ? बदमास !' भन्दै हिर्काउन सुरु गर्छ । त्यो बच्चाले केही भन्ने प्रयास गर्दै थियो, तर ऊ छोराको एउटा कुरा पनि सुन्दैन । त्यसको सजाय दिन बच्चालाई लगातार कुट्न थाल्छ । बिचरा त्यो बच्चा रुँदै जान्छ, तर अजयले बच्चालाई यसरी कुट्छ कि रिसमा बच्चाको हातको एउटा औँला नै भाँचिन्छ ।

बल्ल अजयको रिस शान्त हुन्छ । झस्याङ्ग भएर सामान्य अवस्थामा आउँछ र हतारहतार बच्चालाई हस्पिटल पुऱ्याउँछ । हस्पिटल पुगेको केही समयको अन्तरालपछि डाक्टर आएर अजयलाई भन्छ, 'बच्चाको भाँच्चिएको औँलाले अब जिन्दगीभर पहिलाजस्तो काम गर्न सक्तैन, किनभने उसको सानो औँलाका मसिना नसाहरू पूर्ण रूपले चुँडिएका छन् ।'

त्यो सुनेर अजयलाई एकदम आत्मग्लानि हुन्छ । घर फर्किन्छ र आफ्नो त्यही अघिको नयाँ गाडीतिर हेर्छ । तब उसले छानाबाट खसेझैँ महसुस गर्छ । आँखाभरी आँसु पार्दै भुइँमा थुचुक्क बस्छ । उसको होस उड्छ, किनभने त्यो बिचरा सानो बच्चाले अजयको  नयाँ गाडीमा ढुङ्गाले 'आई लभ यु, पापा' लेखेको रहेछ ।

पूरा कुरा नै नबुझी रिसमा गरेको आफ्नो पागलपनवाला हर्कतहरू सम्झेर अजयलाई आफैसँग एकदमै लाज र घृणा

लाग्न थाल्छ । उसले त्यसका लागि न आफूलाई कहिल्यै माफ गर्न सक्छ, न आफ्नो बच्चासँग कहिल्यै नजर मिलाउन सक्छ ।

यदि उसले आफ्नो बच्चाले भन्न खोजेको कुरालाई केही सेकेन्ड मात्र ध्यानपूर्वक सुनेको भए बच्चाको त्यस्तो हविगत हुने थिएन । बुबा-छोराबीचको रिलेशनसिप कहिल्यै बिग्रने थिएन । तर वास्तविकता के हो भने हामी सबैले जानीजानी या अन्जानमै भए पनि अजयले जस्तै गल्ती गरिरहेका हुन्छौं । एक सेकेन्ड मात्र पनि रोकिएर आफ्नो पार्टनरको कुरा ध्यानपूर्वक सुन्ने कोसिस नै गर्दैनौं । यसले गर्दा हामी उसको भावनालाई बुझ्न सक्तैनौं । यही कारणले आज धेरैको रिलेशनसिप विषालु बन्छ । त्यसैले त म भन्ने गर्छु, पहिला बुझ्ने कोसिस गर, अनि पूर्ण रूपले बुझेपछि मात्र केही निर्णय लेऊ ।

सुवास : त्यो त राम्ररी बुझेँ मैले, आभास ! तर म सबैभन्दा धेरै कन्फ्युज केमा छु भनेँ नि, उसले के चाहिरहेकी छ त्यो नै बुझ्न सक्तिनँ के म ! उसलाई मेरो माया नै फिल नभएको जस्तो लाग्छ ।

आभास : पहिला एउटा कुरा सुन्, सुवास ! बाँकी आफैं बुझ्छस् ।

सुवास : एउटा पुरुषले आफ्नो परिवारका लागि जे पनि गर्न सक्छ । दिनभर-रातभर काम गर्न सक्छ । मोटिभेट भएर गरिबबाट धनीसम्म बन्न सक्छ । तर कहिले ? उसलाई महसुस होस् कि उसको परिवारलाई उसको आवश्यकता छ, उसको खाँचो छ ।

जति धेरै ती खास मानिसहरू अर्थात्, उसको परिवारलाई उसको जरूरत पर्छ, त्यति नै धेरै त्यस पुरुषलाई उसको परिवारको माया महसुस हुन्छ । त्यति नै ठूलाठूला काम गर्न उसले हिम्मत गर्छ । किनभने आफ्नो परिवारका चाहनाहरू पूरा गर्दा उसलाई बलियो र राम्रो महसुस गराउँछ ।

अर्कातर्फ, महिलाहरूलाई माया महसुस हुन पुरुषले उसको केयर गरोस्, उसका सबै कुरा सधैं मनमा राखोस् या सोचोस् भन्ने लाग्छ । उनीहरूको पुरुषले उसलाई सधैं खुसी बनाओस्, माया गरोस् भन्ने सोच हुन्छ । अहिलेको मोर्डन समयको ठूलो समस्या के भएको छ भने आजकाल हरेक महिला स्वतन्त्र हुन चाहन्छन् । यो एकदमै राम्रो कुरा हो, तर यही कारणले एउटा समस्या पनि भइरहेको छ ।

एउटा पुरुषलाई उसकी श्रीमतीलाई उसको जति आवश्यक पर्छ त्यति धेरै माया फिल हुन्छ । यसको बदलामा उसले आफ्नी श्रीमतीको त्यति नै धेरै केयर गर्छ । उसको हेरविचार गर्छ । महिलाहरू पुरुषहरूबाट स्वतन्त्र हुन थाले भने पुरुषलाई माया कम फिल हुन थाल्छ । उनीहरूलाई लाग्न थाल्छ, अब आफ्नी श्रीमतीलाई उसको त्यति जरूरत छैन । यसको कारणले पुरुषलाई निराशा र आफू कम महत्त्वपूर्ण फिल हुन सुरु हुन्छ । यस्तो अवस्थामा पुरुषले महिलाको केयर गर्न कम गर्छ र महिला-पुरुष दुवैलाई माया फिल हुन पाउँदैन । त्यसैले पुरुषले महिलाको त्यति केयर गर्न पाउँदैन । महिलाहरूले पनि पुरुषलाई उसलाई त्यस पुरुषको कति धेरै जरूरत छ, ऊ कति महत्वपूर्ण छ भनेर फिल गराउन सकिरहेका हुन्नन् ।

फलस्वरूप कैयौँ रिलेसनसिप खराब हुन्छ। कति त त्यही कारणले टुटिसकेको पनि छ।

सुवास : यदि जानीजानी या अन्जानमै भए पनि केही प्रतिशत त्यो रिलेशन विषालु हुन सुरु भइसकेको अवस्थामा चाहिँ के गर्ने नि ?

आभास : (लामो सास तान्दै) विश्वास। एकदमै महत्त्वपूर्ण अवयव विश्वास हो हाम्रो पूर्ण स्वस्थ रिलेशनसिपका लागि।

सुवास : कसरी ?

आभास : पख्, तँलाई म व्यावहारिक रूपमै सम्झाउँछु।

सुवास : ल भन्।

आभास : एउटा पाँच वर्षीय फुच्चे र उस्तै उमेरको फुच्ची सँगै खेलिरहेका थिए। फुच्चेसँग धेरै गुच्चाहरू थिए। फुच्चीसँग धेरै चकलेटहरू थिए।

फुच्चेलाई चकलेट एकदमै मन पर्थ्यो। उसले त्यस फुच्ची साथीलाई भन्छ, 'यदि तिमी मलाई तिम्रा चकलेटहरू दिन्छौ भने मसँग भएका सबै गुच्चाहरू तिमीलाई दिन्छु।'

फुच्चीले त्यो प्रस्ताव सहर्ष स्वीकार्छे र आफ्ना सबै चकलेट फुच्चेलाई दिन्छे। फुच्चेले के गर्छ भने आफूसँग भएका गुच्चाहरूमा जुन गुच्चा सबैभन्दा सुन्दर र ठूलो थियो, त्यो लुकाएर आफैँसँग राख्छ र बाँकी सबै फुच्चीलाई दिन्छ।

फुच्चीले त्यस कुराको केही चाल नै पाइन। पछि भइदियो के भने फुच्चेले रातभर सोच्छ, 'मैले आफूसँग भएको सबैभन्दा सुन्दर र ठूलो गुच्चा लुकाएर राखेको थिएँ। त्यो

फुच्चीले पनि त आफूसँग भएको सबैभन्दा मीठो र स्वादिलो चकलेट पक्कै पनि आफैसँग लुकाएर राखेको हुनुपर्छ ।' यसरी ऊ नानाथरी कुराहरू आफ्नो मनमा खेलाउँछ ।

अर्कातिर, फुच्ची एकदमै खुसी थिई । उसले चकलेटको बदलामा धेरै गुच्चाहरू पाएकी थिई । आफूले कुनै बेइमानी पनि गरेकी थिइन । त्यसैले ऊ आनन्दले सुती ।

हो, ठ्याक्कै यही कुरा हामीमा पनि लागु हुन्छ, सुवास ! ध्यान दिएर सुन् है । हाम्रो रिलेशनसिपमा पनि आफ्नो पार्टनरलाई विश्वास नगरेसम्म प्रेम हुनै सक्तैन । हाम्रो मस्तिष्क कहिल्यै शान्त हुनै सक्तैन । हामी कहिल्यै पनि खुसी हुनै सक्तैनौं त्यो फुच्चेजस्तै । किनभने विश्वास नै रिलेशनसिपको प्रमुख कारक हो । विश्वासबिनाको प्रेम सम्भव नै छैन । बिना विश्वासको हाम्रो मस्तिष्क शान्त हुनै सक्तैन । आफ्नो पार्टनरमाथि विश्वास भयो भने मात्रै हामी सुरक्षित फिल गर्छौं । हाम्रो प्रेमको जरा नै विश्वास हो र रिलेशनसिपको आयु र प्रकृति विश्वासमाथि नै निर्भर हुन्छ ।

एउटा सानो बच्चालाई आफ्नी आमामाथि विश्वास हुन्छ । ठीक त्यस्तै गरी हामीले पनि आफ्नो पार्टनरमाथि विश्वास गर्नैपर्छ । बल्ल हामीले एउटा खुसीपूर्ण रिलेशनसिप पाउन सक्छौं । तर हामीले त्यही फुच्चेजस्तै जानीजानी या अन्जानमै कुनै न कुनै खाले त्यस्तै बेइमानी गरिरहेका हुन्छौं । सोही कारणले हाम्रो रिलेशनसिपमा पूर्ण रूपले विश्वासको वातावरण बन्न सकिरहेको हुन्न । यसले गर्दा नै रिलेशनसिपमा समस्याहरू आउने गर्छन् । यही कारणले हामीले आफ्नो प्रेम गुमाउनुपर्छ ।

त्यसैले यो कुरा जति चाँडो बुझ्यो, त्यति नै चाँडो हामी हाम्रो रिलेशनसिपमा खुसीसाथ बस्न सक्छौं ।

सुवास : अबचाहिँ मजाले बुझेँ । अर्को एउटा कुरा पनि, आभास ! मैले सरूलाई कहिलेकाहीँ सानो गिफ्ट दिँदा पनि एकदमै खुसी हुन्छे । फेरि कहिले कुनै ठूलो गिफ्ट दिँदा झनै धेरै खुसी होली भनेको त असन्तुष्ट पो देख्छु ! उत्साह नै देख्दिनँ उसमा । त्यस्तो चाहिँ किन हुन्छ होला ?

आभास : ऊ खुसी नभएकी होइन, सुवास ! तैँले महिलाको प्रकृति नबुझेको हो । ल सुन्, एक जना विशेषज्ञ जोनीग्रोका अनुसार तैँले एउटा गुलाबको फूल सरूलाई दिन्छस् । तँलाई लाग्छ कि सरूले तँलाई एउटा गुलाबको फूलको एक प्वाइन्ट, दुईवटा दिइस् भने दुई प्वाईन्ट, तीनवटा फूलको तीन प्वाइन्टस् या यसैगरी जति ठूलो काम तैँले गर्छस्, तेरी श्रीमतीबाट त्यति नै ठूलो प्वाइन्टस् पाउँछस् भन्ने सोच्छस् । प्रायः सबै पुरुषले यही सोच्छन् ।

सोही हिसाबले महिनाभर काम गरेर जब तैँले आफ्नी श्रीमतीलाई आफ्नो तलब बुझाउँछस्, उसले तँलाई कमसेकम तीस प्वाइन्टस् त दिन्छे नै होला, यसले गर्दा तेरी श्रीमती एकदमै खुसी र सन्तुष्ट हुन्छे होला भन्ने सोच्छस् । तर दुर्भाग्यवश त्यस्तो हुँदैन किनभने प्राकृतिक रूपले नै महिलाहरूले तौलिने या प्वाइन्टस् दिने तरिका अलि भिन्न हुन्छ ।

उसलाई चाहे एउटा गुलाब दे या पाँचवटा, तैँले ऊबाट एक प्वाइन्ट नै पाउँछस् । महिलाहरूलाई हामी पुरुषले कति ठूलो काम गरिरहेका छौं भन्ने कुराको धेरै जरुरी हुन्न ।

उनीहरूका लागि ठूलो या सानो कुरामा त्यति अन्तर हुँदैन । त्यसैले यो बुझ्नु एकदम जरूरी छ कि पुरुषहरूले आफ्नी महिला पार्टनरका लागि सानासाना काम या प्रयासहरू गरिराख्नुपर्छ । जस्तै : सधैं उसलाई अँगालो हाल्ने, प्रेम दर्शाउने, कहिलेकाहीँ उसको तारिफ गर्ने, कहिलेकाहीँ उसका लागि सानासाना उसलाई धेरै मनपर्ने कुराहरू फूल, चकलेटहरू आदि गिफ्ट दिने । यी सबै सजिला र साधारण कुराहरू गर्नाले पुरुषलाई अलिअलि गर्दै प्वाइन्ट्स दिलाइराख्छ र उसको महिला पार्टनरलाई उसका लागि त्यस पुरुषले कति धेरै कुराहरू गर्छ भन्ने महसुस गराइराख्छ । तेरो हरेक प्रयासपिच्छे तैंले सरूमा हेर्न चाहेको सन्तुष्टी र खुसी देख्छस् ।

****

आफ्नो सम्बन्ध आभाससँग सुरु हुनुअगाडि अंशु 'लिभिङ टुगेदर' रिलेशनमा कम्तीमा पाँच वर्ष बसेर आफ्नो पार्टनरलाई पूर्ण रूपले बुझेर मात्र विवाह-बन्धनमा बाँधिने निर्णय गरिसकेको कुरा आभासलाई भनिसकेको थिई । यस कुरामा आभास पनि सहमत थियो । उसले खोजेको पनि त्यही थियो । साथै अंशु र आभासले आफूले बच्चा पाउनुभन्दा संसारमा भएका कैयौं अनाथ बच्चाहरूमध्ये कसैलाई काख लिने र एउटा दुःखीको जीवन सुख र खुसीले भरिदिने सोचिसकेका थिए । उसैलाई आफ्नो बच्चा मान्ने कुरा पनि सुरुमै फिक्स गरिसकेका थिए । उनीहरू दुवै जनालाई कुनै पनि कुराहरू सेयर गर्न या निर्णय लिन एकदमै सजिलो भइरहेको थियो । उनीहरू एक-अर्कालाई जज गर्ने, कम्पेयर गर्ने फिटिक्कै गर्दैनथे । त्यही

भएर एक-अर्कासँग कम्प्लेन पनि हुँदैन थियो । सोही कारणहरूले गर्दा होला, उनीहरूबीच समझदारी यति धेरै थियो कि जोडीभन्दा धेरै बेस्टफ्रेण्डजस्ता देखिन्थे । अत्यन्तै मायालु, सहयोगी र सद्भावपूर्ण व्यवहार भएको उदाहरणीय रिलेशनसिप ।

उनीहरू विदेश गएर उतै बस्ने निर्णय गर्छन् । सँगै विदेश जान के गर्ने ? कसरी जान सकिन्छ ? बुझ्न सुरु गर्छन् । बुझ्दै जाँदा उनीहरूले थाहा पाउँछन्, 'सँगै जाने भए जुन भिसामा गए पनि श्रीमान्-श्रीमती हुनैपर्छ ।'

तब दुवै जनाको कहानीमा नयाँ मोड आउँछ । दुवैले कल्पना पनि गरेका थिएनन् कि यति चाँडो उनीहरूले विवाहका बारेमा छलफल गर्नेछन् । अंशुले आभासलाई सोध्छिन् -

अंशु : आभास ! हामीले एक-अर्कालाई कति बुझ्दा रहेछौँ, आऊ एकछिन छलफल गरौँ । हामीले राम्ररी एक-अर्कालाई बुझ्ने रहेछौँ भने विवाहबारे कुरा गरौँला । नबुझ्ने रहेछौँ भने विवाहको कुरा गर्नु या विवाह गर्नुको कुनै अर्थ नै रहँदैन ।

आभास : (सिरियस हुँदै) हुन्छ, म सहमत छु तिम्रो कुरामा । आफ्नो विपरीतलिङ्गीको प्रकृति नबुझी हामी दुई जना सँगै बस्नु या विवाह गर्नुहुन्न । त्यसैले आऊ, कुनै ठूलो निर्णय लिनुभन्दा पहिले त्यसबारे छलफल गरौँ ।

अंशु : हो, आभास ! ल, आऊ । हामी दुवै जना सँगसँगै एक-अर्काको प्रकृति कतिको बुझ्दा रहेछौँ हेरौँ । ल सुरु गरौँ है :

आभास : ओके । पहिलो : महिलाहरूको कुरालाई एउटा तार्किक उत्तर दिएर सल्टाउने प्रयास गर्नुहुन्न, किनभने प्रायःजसो

महिलाहरू आफ्नो कुराको उत्तर पाउन या त्यस कुरालाई सुल्झाउन बोल्ने या कुरा गर्ने गर्दैनन् । बरु आफ्नो फिलिङ्स् सेयर गर्न, आफूले हल्का र राम्रो फिल गर्न मात्र बोलिरहेका हुन्छन् । त्यसैले तिमीहरू आफैँले समाधान नमागेसम्म दिनुहुन्न ।

अंशु : ठीक हो । हामी महिलाहरूले पनि पुरुषहरूको राय र सुझावहरूलाई महत्त्व दिनुपर्छ । यदि उनीहरू गम्भीरतापूर्वक कुनै सल्लाह दिइरहेका छन् भने आफूलाई त्यो सुझाव त्यति सही नलागे पनि मान्ने गर्नुपर्छ, किनभने हामीले त्यसो गर्नाले पुरुषले आफूलाई आदरणीय र माया महसुस गर्छ ।

आभास : एकदमै ठीक । अब दोस्रो : समस्यामा या तनावमा हुँदा महिलाहरू बोलेर या कुरा गरेर आफ्नो तनाव कम गर्न खोजिरहेका हुन्छन् । त्यसैले आफ्नो धारणा नराखी, तर्क नदिई या बहस नगरी उसलाई मज्जाले मन खोलेर बोल्न या कुरा गर्न दिनुपर्छ । यसबाट महिलाहरूको तनाव त कम हुन्छ नै, साथमा हामी पुरुषहरूको तनाव पनि कम हुन्छ ।

अंशु : सही हो । हामी महिलाहरूले पनि यदि कोही पुरुष शान्त बस्न खोजे झगडा गर्नुहुन्न । त्यो समयमा पुरुषलाई दोष लाउने, निउँ खोज्ने काम झुक्केर पनि गर्नुहुन्न । बरु उसँग एकदमै मायाले कुरा गर्ने प्रयास गर्नुपर्छ ।

आभास : ठीक भन्यौ । अब तेस्रो : हामी पुरुषहरूले महिलाहरूको केयर गर्नाले उनीहरूलाई माया फिल गराउँछ । त्यसैले जति धेरै हुन्छ अलगअलग तरिकाले केयर गर्दै गर्नुपर्छ ।

अंशु : पूर्ण सहमत । हामी महिलाहरूले पनि आफ्नो पुरुष पार्टनरलाई उसको आफूलाई कति धेरै जरूरत छ भनेर फिल गराइराख्नुपर्छ । साथै उसमाथि निर्भर हुँदा हामीलाई कुनै डर हुन्न । त्यसैले 'हामी निर्धक्क छौं, अनि हाम्रा सबै इच्छाहरू पूर्ति गर्न ऊ पूर्ण सक्षम छ' भनेर पनि उसलाई फिल गराइराख्नुपर्छ । हाम्रो यो विश्वासले ऊ प्रेरित भइराख्छ र माया फिल गरिराख्छ ।

आभास : सही हो । अब चौथो : महिलाहरू कहिलेकाहीँ यत्तिकै निराश हुनु स्वभाविक हो । त्यस्तो बेलामा हामी पुरुषले उसलाई राम्रो फिल गराउन सकिरहेका छैनौ भने पनि रिसाउनु भने फिटिक्कै हुन्न । प्रतिक्षा गर्नुपर्छ, उसको साथै बस्नुपर्छ र ऊसँग कुरा गर्ने कोसिस गरेर उसलाई सपोर्ट गर्नुपर्छ ।

अंशु : शतप्रतिशत सही, आभास ! हाम्रो पुरुषले पनि आफ्नो तनाव कम गर्न या कुनै कारणबिना एक्लै समय बिताउन खोज्छ भने उसलाई शङ्का गर्ने, विश्वास नगरेको जस्तो गर्ने काम फिटिक्कै गर्नुहुन्न । हामीले 'उसले मलाई माया गर्दैन या माया गर्न कम गर्‍यो' भनेर पनि सोच्नुहुन्न । त्यस्तो बेलामा पुरुषलाई जे गर्न मन लाग्छ, गरोस् भन्ने सोच्नुपर्छ । त्यस्तो गर्‍यो भनेर दुःखी बन्नुहुन्न । किनभने ऊ केही समयपछि फर्केर आउनेछ र हामीलाई अझै धेरै माया गर्नेछ ।

आभास : ध्रुवसत्य । अब अन्तिम : महिलाहरूलाई सानासाना कुराहरू त्यति नै महत्त्वपूर्ण हुन्छ, जति ठूला कुरा । हामी

पुरुषहरूले उनीहरूका लागि सानासाना प्रयास या कुराहरू गर्नु नै ठीक हुन्छ ।

अंशु : सही हो । सबै पुरुषहरू त्यति स्मार्ट नहुन सक्छन् र हामी महिलाहरूका लागि सानासाना प्रयासहरू कति महत्त्वपूर्ण हुन्छ र ती सबै कुरा गर्नाले हामीलाई कति स्पेशल फिल गराउँछ भनेर नबुझ्न सक्छन् । त्यसैले हामी महिलाले नै आफ्नो पुरुष पार्टनरलाई स्वतन्त्र रूपमा भनिदिनुपर्छ, हामीलाई कुनकुन सानासाना कुराहरूले राम्रो फिल गराउँछ ? ताकि उसले हामीलाई अझै राम्रोसँग बुझ्न सकोस् ।

## भाग १७

सुवास : एकदमै ठीक हो आभास, तैँले भनेका सबै कुराहरू । यस्ता कुरा न हामीलाई कसैले सिकाउँछ, न हामी आफैँ सिक्न खोज्छौँ । त्यसैले त आजकाल प्रायः सबैको सम्बन्ध बाहिर देख्दा राम्रोजस्तो देखिएला, तर आफ्नो अमूल्य जीवनसँग विभिन्न बहानामा सम्झौता गरेर बनाएको बाहिरबाट आकर्षक सम्बन्धहरू पनि भित्रबाट खोक्रा हुन्छन् । सोच्ने हो भने हामी आफैँले चाल नै नपाउने गरी अमिलो बनिसकेको हुन्छ ।

आभास : त्यही त । गहिरिएर हेर्दा धेरै सम्बन्धहरूको अवस्था डरलाग्दो र दयनीय छ । त्यही भएर दिन-प्रतिदिन सामान्य नवविवाहित जोडी होस् या संसारकै सर्वाधिक धनी बिल र आमन्डा गेट्सको जोडी होस्, केही समयको अन्तरालमै छुट्टिने क्रम बढ्दो छ । एकपटक डिभोर्स गर्ने ठाउँ अर्थात्, अदालतमा गएर हेर्दा थाहा हुन्छ कि लभ गर्दा 'तिम्रा लागि आकाशको तारा झार्दिन्छु' भनेर विवाह-बन्धनमा बाँधिएका धेरै जोडीहरू सँगै बस्न नसकेर डिभोर्स गर्न अदालत पुगेका हुन्छन् । एक-अर्कालाई 'धेरै बोलिस् भने बङ्गारा झार्दिन्छु'

भन्दै लडिरहेका देख्छस् । प्रायः हामी महिला-पुरुष दुवैले एक-अर्काको प्रकृति नबुझेर आउने कम्पेयर, कम्प्लेन र जजमेन्टले गर्दा नै यस्तो भएको देखिन्छ ।

सुवास : त्यही त । विवाह गराउने पण्डित साइकलमा अनि सम्बन्ध-बिच्छेद गराउने वकिल कारमा आउँछन् । एक त हामी आफैँ बुझ्न-सिक्न खोज्दैनौँ । सम्बन्ध जोगाउन प्रयास गर्दैनौँ । त्यसमाथि यहाँ आजकाल जोड्नेहरूभन्दा तोड्नेहरू बलिया हुँदै छन् ।

आभास : हो त ! हरेक कुरामा केही न केही नियम लागु हुनेजस्तै सबै सम्बन्धमा आफ्नै खालका नियमहरू लागु हुन्छन् । केही झुकाइ, केही संयमता या समझदारीपन त्यहाँ पनि लागु हुन्छ । यो कुरा हामी सबैलाई थाहा छ । लभ गर्दा दुःख-सुख सँगै बाडौँला भनेर कसम खाने-बोल्ने, अनि विवाहपछि सम्बन्धमा थोरै उतारचढाव आउनेबित्तिकै आफ्नो फाइदा-घाटाका बारेमा सोच्ने गर्छन् । व्यापारीले जस्तै जोड-घटाउ गरेर, स्वार्थीपन देखाएर किन नानाथरी कुरा गर्नु ? सम्बन्ध अमिलो बनाउने या छुट्टिने नै गरी किन रमिता गरेर तनाव लिनु ? जसलाई बिहेपछि सासू-ससुरासँग बस्न मन लाग्दैन, उसले केटा पनि परिवारवाला होइन अनाथाश्रमबाट खोजे हुन्छ । बरु नियमबिना कुनै सम्बन्ध हुँदैन भनेर थाहा पाएपछि आफूलाई पूर्ण स्वतन्त्रता चाहिने भए पहिल्यै त्यस्तो कुनै सम्बन्ध नै सुरु नगर्ने नि । एक्लै बस्ने, अनि आफूलाई मन लागेको गर्ने नि ! किन दुनियाँभर नाटक गरी तमासा देखाएर अरूलाई पनि तनाव दिने ? किन

आफू पनि तनाव लिने ?

सुवास : त्यही त ! बिना फिलिङ्स्को जिन्दगी बाँचिरहेका छन् मान्छेहरू । फिलिङ्स् कसरी निकाल्छन् यार उनीहरू ?

आभास : बिना फिलिङ्स्को फिलिङ्स् ? कस्तो ?

सुवास : सुन्, कति मानिसहरू कति सजिलै यत्तिकै भनिदिन्छन् के हावा तालमा 'आइ लाइक यु, आइ लभ यु ।' त्यसैले मैले यो एक्कासि हुने माया बुझ्नै सक्तिनँ । कसैको रूप, शरीर अनि सामाजिक र आर्थिक हैसियत देखेर कति चाँडै मानिसहरू आफ्नो फाइदाको जोड-घटाउ गर्छन् । सम्बन्धजस्तो पवित्र कुरामा पनि फाइदा हुने भए मात्र सँगै बस्छन् र घाटा हुने भए तर्किने र छोड्ने गर्छन् । हो, योचाहिँ म बुझ्नै सक्तिनँ । कसरी गर्छन् होला ?

आभास : त्यस्तै हो, सुवास ! आजकल सबै व्यापारी भएका छन् । स्वार्थी भएका छन् । त्यसैले त म भन्छु, 'सम्बन्धलाई भावनाको मलम लगाए पो टिक्छ त ! स्वार्थले सिलाएपछि त उध्रिएर बजारभाउमा बिक्छ नि !'

सुवास : एकदमै सही कुरा गरिस् ।

रजनी : हैन हो, कसले के सही गऱ्यो हामी पनि सुनम् न !

एक्कासि रजनी चिच्याउँदै आइपुग्छिन् । साथमा साहिल र सरू पनि हुन्छन् । त्यो देखेर आभासले साहिललाई भन्छ -

आभास : साहिल ! तँलाई अघि नै सरू र रजनीलाई लिन पठाएको, आफैँ पो हराइस् त !

साहिल : अँ के ! अघि बाटोमा जाँदा जङ्गलबाट बाघ निक्लेर मेरो अगाडि झ्वाम्म आएर उभिरा एक्कासि...

सुवास : (अचम्म मान्दै) कहाँबाट आयो यहाँ बाघ ? अनि के भयो ? भागिस् ?

सबै जनाले आभासको मुखमा उत्सुक भएर टुलुटुलु हेर्दै थिए, उसको जवाफको प्रतिक्षा गर्दै.

साहिल : केको भाग्नु नि ? मैले पनि टिभी अफ गरिदिएँ ।

सबै जना मरीमरी हाँस्छन् । आभासले भन्छ -

आभास : ओइ, साहिल ! तँसँग बोलेर सकिन्नँ ।

साहिल : लौ जे पाए त्यही के ! किन सकिन्न बोलेर ? यत्तिकै जे पनि भन्ने ? (ठुस्केर भन्छ) यस्तो खुट्टा तानेको मन पर्दैन है मलाई त !

आभास : लौ कसले तान्यो र तेरो खुट्टा ? हा.हा.हा.. !

साहिल : तैँले नि (मुख बिगार्दै) अरूको खुट्टा तान्नुको सट्टा आफ्नै खुट्टा ताने पो ! (जिब्रो बाहिर निकालेर जिस्क्याउँदै) कमसेकम एक्सरसाइज त हुन्छ, हा.हा.हा.. !

फेरि सबै जना गललल हाँस्छन् । अनि सबै मिलेर गफ गर्दै, सङ्गीतको लयमा झुम्दै, पोलेको मासु खाँदै रमाउन थाल्छन् । रातमा दुई जना महिला एउटा कोठामा र तीन जना पुरुष अर्को कोठामा सुत्न जान्छन् । पुरुषहरूको कोठामा सबै जना बियरको हल्का नशामा हुन्छन् । बत्ती निभिसकेको हुन्छ । सुवासचाहिँ नशामा फतफताइरहेको हुन्छ ।

सुवास : सकिन्छ भने दियो जलाउनु नि, तर अर्काको मन जलाएर के पाउँछन् यार ! हुन त के दुःखी हुनु, यस्तै हो जिन्दगी ! यहाँ पहिल्यैदेखि नै कपास र तेल जल्दै आएको छ । तर मान्छेहरू भन्छन्, दियो जलिरहेछ !

साहिल : ओइ, सुवास ! तँलाई एउटा कुरा थाहा छ ?

सुवास : सुतेको छैनस् तँ ? के कुरा ?

साहिल : छ नि, एक दिन भगवान् र मेरो घमासान लडाइँ भयो है ? त्यसको नतिजा भगवान् अहिले माथि छन् । हा.हा.हा.. !

सुवास र आभास सँगै हाँस्छन् ।

आभास : ह्या ! म सुत्न खोजिरहेको छु । तिमीहरू धेरै हल्ला नगर त !

सुवास : (फेरि भावुक हुँदै) भिजिसकेपछि पाएको छाता र मन टुटिसकेपछि जोडिएको नाताको खासै अर्थ हुँदैन है साहिल ?

साहिल : हो यार ! किन एक्कासि यस्तो सोधिस्, भन् त ?

सुवास : त्यसै सोधेको । किस्मतले फैसला बदलिँदैन, तर फैसलाले किस्मत भने अवश्य बदलिने रहेछ भनेर सिक्दैछु । त्यही भएर ।

साहिल : मुख्य कुरा आशा धेरै गरिस् भने मन पनि धेरै दुख्ने गर्छ । त्यसैले जुन दिन आशा गर्न छोड्छस् त्यो दिन जस्तोसुकै परिस्थितिको सामना गर्नु परे पनि केही फरक पर्दैन, सुवास ! त्यसैले त भनिन्छ, हामीलाई पछाडि धकेल्ने

अरू कोही होइन, बरु हाम्रै विचार हो ।

सुवास : ठीक हो । तर एकपटक सोच् त, हामी मानिस स्वतन्त्र रूपले जन्मिए पनि समयसँगै आफूलाई चारैतिरबाट बन्धनले घेरिएको महसुस गर्छौं नि ? त्यही भएर विभिन्न विचारहरू आउने हो नि ।

साहिल : हो त्यस्तो हुन्छ हामीलाई, तर स्मरणीय कुरा के छ भने हामीले सपनासँग जिउने साहस गर्नुपर्छ । हामी अरूको सपनाको गुलाम भएर बाँच्न जन्मिएको होइन । यो कुरा बुझेर लागु गरेपछि संसार भुलेर आफू आफैंजस्तो भएकोमा रमाउँदै बाँच्न सकिन्छ । अनि त्यस्ता सोचहरू पनि कम आउने गर्छन्, सुवास ! मुख्य कुरा, आफू आफैंजस्तो भएर संसार भुलेर रमाउँदै बाँच्न सिक् । अनि याद राख्, असफलता कुनै हार होइन । तैंले तब मात्र हार्छस्, जुन दिनदेखि फेरि अर्को कोसिस गर्न छाड्छस् ।

उनीहरू दुई जनाको कुरा सुनेर सुत्ने प्रयास गरिरहेको आभास फेरि बोल्छ -

आभास : ओहो नि ! के सुन्नपऱ्यो यो कानले ? पवित्र भए मेरा कानहरू ! साहिललाई लागेछ जस्तो छ ! कस्तो राम्रोराम्रो कुरा गरिरहेको छ त ! (साहिललाई जिस्काउँदै ) झ्याप हो ब्रो ?

साहिल : म पनि गर्छु नि राम्रा कुरा, तर समय र परिस्थिति हेरेर मात्र किनभने म अरूजस्तो मेरो मस्तिष्कको नियन्त्रणमा होइन, बरु मेरो मस्तिष्कचाहिँ मेरो नियन्त्रणमा छ । त्यसैले म जे देखिन्छु त्यो म होइन र म जे छु त्यो म

सितिमिति सबैलाई देखाउँदिनँ। गर्दै गरोस् यो समाजले मलाई जज, कम्पेयर र कम्प्लेन। मैले संसार भुली आफू खुसी भएर जिउन सिकिसकेको छु। त्यसैले तँ त्यो बाटोमा नहिँड् के, जुन बाटोमा हजारौँ मानिसहरू हिड्छन्। तँ बरु त्यो बाटो हिँड्, जुन बाटोमा कोही हिँड्दैन। मैले त्यही फरक बाटो अपनाएर बाँच्न सिकेको मात्र हुँ। अनि तैँले जे गरिरहेको छस्, त्यही मात्र गरिराखिस् भने जे पाएको थिइस् त्यही मात्र पाइरहने छस्। हामी आफ्नो नजरमा सही हुनुपर्छ, दुनियाँ त भगवान्सँग पनि दुःखी छ यार !

आभास : ओहो, साहिल ! मनमै छुने गरी कस्तो सत्य भनिस् यार ! हो नि, हामीले जहिले पनि एउटा कुरा याद राख्नुपर्छ : कहिल्यै उनीहरूको पछि लाग्नुहुँदैन, जसले हाम्रो इज्जत गर्दैन।

सुवास : हो त। राम्रो काम गरे कसैले वास्ता गर्दैन, तर अन्जानमा एउटा गल्ती भयो भने लाटाहरू पनि बोल्न थाल्छन्।

साहिल : त्यही त ! मान्छे कमजोर र गरिब छ भने नजिकको नाताले पनि लुकाउँछन्। धनी र शक्तिशाली छ भने टाढाको नाताले पनि बढाइचढाइ गरेर आफ्नै भन्छन्।

आभास : हो भन्या। मैले त कति देखिसकेँ। अब त्यही धनी र शक्तिशाली मानिसको समय खराब चलेमा हिजोसम्म जो 'ज्यूज्यू' गर्थे भने त्यो बेला उनीहरूले नै सबैभन्दा धेरै 'थुथु' गर्न सुरु गर्दा रहेछन्।

साहिल : त्यही भएर कोही पनि मानिस खराब हुँदैनन्, असफल हुँदैनन्, कमजोर र शक्तिशाली हुँदैनन्। अरूलाई

जज गर्नहुँदैन। बलवान् त समय हुन्छ नि। मानिसहरूले त्यतिकै घमण्ड गरेको देख्छु म त !

सुवास : हो यार, गर्छन्। अनि घमण्ड बिल्कुलै राम्रो होइन किनभने आफू टुक्राटुक्रा हुनुअगाडि खुत्रुकेलाई पनि लाग्छ कि आफूभित्र भएको सबै पैसा आफ्नै हो।

आभास : हो नि, तर यस्ता कुराहरू बुझ्न कसलाई पो फुर्सद छ र ! मानिसहरू अरूका बारेमा राम्रो सुन्दा शङ्का गर्छन्, तर नराम्रो सुन्नेबितिक्कै विश्वास गर्छन्। यो यथार्थ बुझ्ने कसले !

साहिल : त्यही कुराहरू नबुझ्ने भएरै त आजकल सबैको सम्बन्ध बाहिरबाट हेर्दा झलमल्ल र भित्रबाट हेर्दा अल्लमल्ल छ। हा.हा.हा.. ! अस्ति के है ? मेरो एउटा भूपू गर्लफ्रेण्डलाई मैले पहेँलो मन पर्छ भन्देको उसले त दाँत नै माझ्न छोड्दिरा भन्या !

सुवास र आभासको हाँसो गुन्जिन्छ।

आभास : (हाँस्दै) को हो त्यस्तो ?

साहिल : थिई एउटी। कुनै बेला म उसको दिलको राजा थिए। केही समयपछि उसको मुटुमा गणतन्त्र आयो। बाँचुञ्जेल साथ दिन्छु भन्थी, मरिछ कि क्या हो ? अहिले त अत्तोपत्तो छैन।

सुवास र आभासको हाँसो थामिन्न। साहिल लगातार बोल्छ।

साहिल : हो भन्या ! राम्रो चिज झट्टै चिनिँदैन रे। अब

मलाई नै हेर् न, कसैले मतलब नै गर्दैनन् । मतलब नगर्नेलाई म पनि बाल दिन्नँ । तिनीहरूमा मात्र छ 'एटिट्यूड' ? मसँग भएको एटिट्यूडको झनै कुरा नगरे हुन्छ । टिभीमा समाचार भन्नेले मलाई नमस्कार नभनी समाचार त भन्दैन के सोच्या ?

आभास : अनि ? (हाँस्दै) सकियो कि अझै छ ?

साहिल : छ नि । यो मनभित्र कुरा गुम्सेर खाँदिएर अमिलो भइसक्यो । कुन दिन गुन्द्रुक बन्ला भन्ने पीर । म कसैलाई राम्रो लाग्दैन त केही छैन यार ! हर कोहीको च्वाइस् ब्राण्डेड कहाँ हुन्छ र ! एउटी थिई मोरी, तर सपनामा आउन पनि छोडी । खुट्टा भाँच्चिएछ कि के हो त्यसको ?

आभास : ओइ, साहिल फतफते ! भयो अब सका तेरो कुरा । आधा रात भइसक्यो । सुत्नुपर्छ अब । हामी सबै एउटै मात्र कुरा मनन गर्दै सुतम् अब ।

सुवास र साहिल एकैपटक : के कुरा ?

प्रब्लम आउनु 'पार्ट अफ लाइफ' हो ब्रो, तर त्यसलाई हाँसेर सामना गर्नु 'आर्ट अफ लाइफ' हो । त्यही भएर जस्तोसुकै परिस्थितिमा पनि मुस्कुराउन छाड्नुहुन्न । ल, गुड नाइट ।

सुवास : सही हो सही. गुड नाइट ।

साहिल : गुड नाइट ।

# भाग १८

अंशु : आम्मा, (खुसी हुँदै) कति समझदार तिमी !

आभास : तिमी पनि । अनि थाहा छ, माया ! तिमीले त्यो क्रिम-स्निम दलिराख्नु जरूरत नै छैन । तिम्रो एक मुस्कानले नै तिमीलाई एकदमै क्युट बनाइदिन्छ नि ।

अंशु : (लजाउँदै) हो र ? थ्याङ्क यु ।

आभास : अँ, हो नि । मेरो जिन्दगीमा तिमी आएबाट प्रत्येक बिहानीमा शीतका थोपाहरूजस्तै रहरलाग्दा आशाका टुक्राहरू देखिन थालेका छन् ।

अंशु : (लजाउँदै) मेरो पनि त्यस्तै छ हालत, आभास ! बितेका पलहरूसँगै तिम्रा सम्झना र मायाहरूको छाप यो हृदयभित्र गहिरिँदै छ । अब के गर्ने हो, आभास ?

आभास : तिमीलाई के लाग्छ ? सक्छौ मसँगै विवाह गरेर जिन्दगी बिताऊ न ?

अंशु : हिजोसम्म तत्काल विवाह गर्ने एउटा पनि सोच आएको थिएन । आज तिमीसँग कुरा गरेपछि भने आयो । अब परिस्थितिले पनि त्यही मागिरहेको छ । भविष्य सुखमय

बनाउने भए पुराना मान्यताहरूलाई बदलेर म विवाहका लागि तयार छु जस्तो लागिरहेको छ । अघिबाट पक्का भएँ म तिमीसँग जिन्दगी बिताउन सक्छु भनेर, किनभने त्यस्तो समझदारी एकदमै न्यून व्यक्तिमा हुन्छ । एक त पहिल्यै माया गर्थें तिमीलाई, अब त झनै मेरो भविष्यको पतिदेव, मेरो श्रीमान् भन्ने निश्चित भएर झनै धेरै माया गर्न थालिसकें । तिमीलाई नै सारा संसार मान्न थालिसकें, आभास । (लजाउँदै) आइ लभ यु एकदमै धेरै ।

आभास : (भावुक हुँदै) म पनि सक्तिनँ अब तिमीबिना बाँच्न । आइ लभ यु मोर माया ! तिमीभन्दा पर कुनै याद नहोस् । तिमीभन्दा नजिक कुनै साथ नहोस् ।

अंशु : आमै ! कस्तो स्विट आभास तिमी !

आभास : भनिन्छ नि, माया ! यदि कसैलाई धेरै याद गऱ्यो भने तारा खस्छ रे ! अनि मलाई लाग्छ, कुनै दिन आकाश रित्तो हुनेछ र त्यसको दोषी म हुनेछु । साँच्चै भन्नुपर्दा त्यति धेरै याद आउँछ तिम्रो मलाई ।

अंशु : (लजाउँदै) साँच्चै ?

आभास : हो भन्या ! अब त बिरामी हुँदा एक्स-रे गराउन नि डर लाग्न थाल्यो, माया ! कतै रिपोर्टमा तिमी देखिन्छौ कि जस्तो लाग्छ ।

अंशु : (हाँस्दै) हा.हा..हा.. गफाडी !

आभास : हो के ! सजायमा तिमीलाई पाउने भएको भए मैले ठूलै गल्ती गरिसक्थेँ होला (हाँस्दै) ।

अंशु : हा.हा.हा.. कति हसाउँछौ है ? तिमी मलाई कति धेरै खुसी दिन्छौ नि !

आभास : बिना कारण भगवान्‌लाई त याद नगर्ने यस दुनियाँमा तिमीले धन्न मलाई सम्झिराख्छौ। त्यही भएर म आफू पनि तिमीसँग एकदम धेरै खुसी छु र तिमीलाई पनि खुसी राख्ने प्रयास गर्छु। अब त तिमी मेरो नभए नि चल्छ। बस्, तिमी बाँच्नुपर्‍यो अनि खुसी भएर हाँस्नुपर्‍यो, माया !

अंशु : छि के बोलेको त्यस्तो ? (भावुक हुँदै) अब हामी कहिल्यै अलग हुन्नौं।

आभास : हो माया, अब त हुन्नौं। अनि गर्ने भइयो होइन त बिहे ?

अंशु : (लजाउँदै) अँ गरौं। अब म तिमीलाई गुमाउन चाहन्नँ।

आभास : (मरिकँदै) हुन्छ गरौं, माया ! म पनि अब तिमीबिना बाँच्न सक्तिनँ।

# भाग १९

बिहान सबै जना उठ्छन् र चिया पिउने ठाउँमा जम्मा हुन्छन् । त्यहाँ सुवास हुँदैन । केही बेर प्रतिक्षा गर्दा पनि सुवास नआएपछि उसलाई खोज्न जान्छन्, तर ऊ भेटिँदैन । सबै जना मिलेर रिसोर्टभरी खोज्छन् । कतै नभेटेपछि सबै जना ऊ सुतेको रूममा उसले बोकेर आएको ब्याग हेर्न जान्छन् । ब्याग पनि त्यहाँ हुन्न ।

सरूले ऊ सुतेको बेडको सिरानीमुनि आधा सिरानीभित्र र आधा बाहिर देखिने गरी राखेको एउटा कागज नोटिस गर्छे र हतारहतार त्यो कागज हातमा लिएर पढ्छे । सरूको आखाँभरी आँसु देखेर सबैले सोध्छन्, "के भयो ?"

सरूले आफ्नो मुखबाट एक शब्द पनि निकाल्न सक्तिन । त्यो देखेर सरूको हातबाट त्यो कागज खोसेर सबैले टाउको जोडेर पढ्न थाल्छन् । त्यस पत्रमा लेखिएको थियो :

मेरा प्याराहरू,

सरू, तिमीलाई याद छ ? मैले भन्ने गर्थें नि... एक दिन यस्तो कहानी लेखेर बिदा हुन्छु, जुन पढिसकेपछि तिमी

चाहेर रुन पनि सक्तैनौ । हो, आज त्यही दिन हो ।

सरू ! हिजो म ट्वाइलेट जाँदा संयोगले तिम्रो र रजनीको कुरा सुनें । हाम्रा बारेमा भइरहेको सबै गोप्य कुरा सुनें मैले । सुन्न नहुने थियो होला, तर मैले सुनें । अनि जे हुन्छ, झनै राम्रो हुन हुन्छ भनेझैं ठीकै भयो । नत्र मलाई तिम्रो मनको कुरा कहिल्यै थाहा हुने थिएन । अन्जानमा मैले तीन जनाको जीवन बिगारिरहेको हुन्थें । तर अब मैले मबाट अन्जानमा हुन गएको गल्ती सुधार्ने छु ।

सरू र साहिल ! प्लीज मलाई त्यो गल्ती सुधार्ने मौका देओ । कसरी हुन्छ ? के गरेर हुन्छ ? सरू ! तिम्रो पहिलो प्रेम, जसलाई तिमी अझै त्यति धेरै माया गर्छौ, उसैसँग जीवन बिताउँदा राम्रो हुन्छ । अनि साहिल ! तैं पनि सुन् । सरू पहिला के थिई ? कस्तो थिई ? मलाई थाहा भएन । यतिचाहिँ पक्का हो कि त्यो पहिलाको सरू र अहिलेको सरूमा आकाश-जमिनको फरक छ । यो अहिलेको सरू एकदमै मायालु र समझदार छिन् । मुख्य कुरा, तँलाई अझै पनि मनमनै एकदमै धेरै माया गर्छिन् । तँ एकदमै भाग्यमानी रहेछस् । तँ पनि कसैको आँखाको तारा र मुटुको धड्कन भइसकेको रहेछस् । त्यसैले अब धेरै मन चञ्चल नबना । अनि पुराना सबै कुराहरूलाई एउटा नराम्रो सपना सम्झेर भुलिदिनू । तिमीहरू जस्ता छौ, त्यस्तै रूपमा स्वीकार गरेर फेरि आफ्नो पार्टनरलाई चेन्ज गर्ने, कन्ट्रोल गर्ने र म्यानुपुलेट गर्ने कोसिस नगरी नयाँ जिन्दगी सुरु गर । तिमीहरू दुवै जनालाई म दुवै हात जोडेर विनम्रपूर्वक अनुरोध गर्दछु ।

मलाई तिमीहरूले आफ्नो ठान्छौ भने मेरो अनुरोध स्वीकार ।

म राति सुतिनँ । तिमीहरू सबै सुतेपछि यो चिट्ठी लेखेर हिँड्न लागेको छु । कहाँ जान्छु, के गर्छु, केही टुङ्गो छैन । म अनाथका तिमीहरू नै हौ परिवार । एउटा भाइको मायालाई अन्जानमा अपनाएर गरेको त्यो गल्ती, अनि त्यो कुरा थाहा पाएपछि मैले आफ्नो गल्ती त सुधानुपर्‍यो नि होइन र ? एउटा भाइ र उसको जिन्दगी कसरी जानीजानी बिगारूँ म अब ? कसरी उनीहरू दुई जनाको बीचमा बसूँ ? मेरो नैतिकताले दिँदैन । मैले बिगार्न सकिनँ पनि ।

जिन्दगीमा म कति सही र कति गलत छु भन्ने कुरा दुई जनालाई मात्र थाहा छ । एक परमात्मालाई र अर्को मेरो अन्तरात्मालाई । आज यो जे भइरहेको छ, यसमा म दुःखी छैन । त्यसैले कोहीसँग केही गुनासो पनि छैन । किनभने हाम्रो जीवनमा आज जे भइरहेको छ, हामीले ठ्याक्कै त्यही कुरा हाम्रो जीवनको कुनै बेलामा रिसमा, आवेगमा या अरू कुनै बेला बोलेको, सोचेको अर्थात्, कुनै बेला आफैँले चाहेका कुरा भइरहेको हुन्छ । अलिकति गहिरिएर सोच्यो भने सबैले थाहा पाउँछन् यो कुरा । म र सरू पनि झगडा पर्दा विगतमा कतिपटक दुवैले रिसको झोंकमा छुट्टिने कुरा गरेका थियौँ । अनि 'जे सोच्छस्, त्यही पाउँछस्' भनेझैँ आज त्यही पाइरहेका छौँ । त्यही भइरहेको छ, जुन हामीले कुनै बेला चाहेका थियौँ । त्यसैले दुःखी छैन म । एक्लो जीवन उराठलाग्दो, बोरिङ हुन सक्ला, तर शान्तिपूर्ण र आनन्दको भने पक्कै हुनेछ ।

आभास, मेरो भाइ ! तैँले मेरा लागि जे-जस्तो गरिस्, त्यस्तो त मेरो आफ्नै साख्खै दाजुभाइ भएको भए नि गर्दैनथे होला। तँसँग आभार व्यक्त गर्नका लागि यो एउटा जुनीले पुग्दैन मलाई। तेरो चाहिँ मैले ऋण नै बोकेर गएँ है ?

मसँगै बसेर हिजो राति समयले पनि रुँदै भन्दै थियो, 'तिमी ठीक छौ सुवास, खराब त म चलिरहेको छु।' अन्तमा, तिमीहरू सबै जनाले मलाई आजसम्म दिएको माया र साथका लागि भित्री मनदेखि नै आभार व्यक्त गर्दै धन्यवाद टक्राउँछु। साथै सधैं हाँसिरहनू, रमाइरहनू र खुसी हुनू भन्दै बिदा लिन्छु।

- सुवास

पत्र पढेपछि सबै मिलेर धेरै समयसम्म सुवासको निकै खोजी गर्छन्। उसलाई जमिनले निल्यो कि आकाशले गायब बनायो ? उसको कतै पनि अत्तोपत्तो चल्दैन। अन्तिममा सबै जना थाक्छन् र खोज्न छोड्छन्।

सुवास गएपछि आभासको जिन्दगीमा अंशुले प्रवेश गर्छे। अहिले उनीहरू वैवाहिक जीवनमा बाँधिएको पनि थुप्रै भइसक्यो। उनीहरू विदेशतिरै छन्। हरेक दिन एक-अर्काको जिन्दगीमा खुसी दिन लागिपरिरहेका छन्। त्यसैले हरेक दिन उनीहरूको एक-अर्कासँग लभ परिराख्छ। जसले गर्दा आज वर्षौं बित्दा पनि उनीहरूको माया झनै गहिरो र ताजा छ, सुरुवाती दिनहरूमा जस्तै।

साहिल र सरूले पनि महिला-पुरुषको फरकफरक प्रकृतिका बारेमा बुझ्न थालेर हो, वर्षौंदेखि मनभित्र गुम्साएर राखेको सम्बन्ध फुकेर हो या आफ्नो परममित्र सुवासले भनेको मानेर हो, आजकल निकै खुसी छन् एक-अर्कासँग। चाँडै विवाह पनि गर्दैछन् रे।

उता रजनी पनि पहिला जस्तो थिई, त्यसैगरी आफ्नै दुनियाँमा मस्त छिन् रे। सबै जना एकदमै खुसी छन् रे।

# भाग २०

आधा जिन्दगी सर्टिफिकेट जम्मा गर्दै र आधाचाहिँ त्यसको फोटोकपी गर्दै बिताउँछौ हामी । चाहे त्यो सर्टिफिकेट होस् या पैसाको थुप्रो, हुन त जे पनि कागजकै खोस्टा हुन् नि ! त्यसको पछि लागेर आफ्नो पार्टनर र सम्बन्धलाई बुझ्न खोज्दैनौँ । नकारात्मक ऊर्जाहरूले भरिएका हामीलाई आफू रोबोटिक जीवन बिताउन अभ्यस्त बनिसकेको के थाहा ? जिन्दगीको सही मूल्य र मजा के थाहा ? हामीलाई त त्यही कागजको खोस्टा प्यारो लाग्छ । जसले यो कुरा बुझिसकेको हुन्छ, उसलाई बन्धनहरू बीचमै भए पनि आफ्नो जीवन स्वतन्त्रताका साथ लिमिटलेस भएर बाँच्न प्यारो लाग्छ ।

यदि म विवाहका लागि तयार छैन भने प्रेम-सम्बन्धका लागि पनि तयार छैन । आफ्नो भनेर एउटा छुट्टै मापदण्ड तयार गर्नैपर्छ । किनभने यदि म विवाहका लागि तयार छैन भने रिलेशनसिपमा केका लागि बस्नु ? रमाइलोका लागि ? त्यसका लागि हो भनेचाहिँ बरु कुनै खेल खेल्न जाम्, घुम्न जाम् या नयाँ सोख बनाम् । जेसुकै गरौँ, तर अरू कसैको मनसँग रमाइलोका लागि मात्र नखेलौँ ।

एकपटक एउटा कार कम्पनीले संसारको सबैभन्दा स्टाइलिस र महँगो कार बनाएछ । कारलाई सार्वजनिक गर्न कम्पनीबाट बाहिर निकाल्न खोज्दा एउटा समस्या आएछ । कारको हाइट त्यस कम्पनीको गेटभन्दा ३-४ इन्च मात्र ठूलो भएछ र बाहिर निकाल्न मिलेनछ ।

अब त्यहाँ भएभरका इन्जीनियरहरू मिलेर सल्लाह गर्न थालेछन्, 'के गर्ने ? गेट फोर्ने कि कारलाई काट्ने ?'

धेरै बेर छलफल गर्दा पनि उनीहरूले त्यस समस्याको समाधान निकाल्न सकिरहेका थिएनन् । त्यही बेला कम्पनीको अफिस सरसफाइ गर्ने एक जना मानिसले तिनीहरूको कुरा सुनिरहेको थियो । उसले तिनीहरूसँग भन्छ, 'सर, मसँग एउटा उपाय छ, भनूँ ?

सबै दिग्गजहरूले त्यस व्यक्तिलाई तलदेखि माथिसम्म हेर्छन् र मीटिङमा उसले सोचेको उपाय बताउने अनुमति दिन्छन् । त्यस व्यक्तिले भन्छ, 'सर ! कारको टायरहरूको हावा निकाल्दिनुस् न ! अनि त्यसको हाइट घट्छ र गेटबाट बाहिर निक्लिन्छ ।'

कुरा एकदमै सामान्य छ, हामीभित्र भएको 'इगो' या 'घमण्ड' पनि त्यही टायरमा भएको हावाजस्तै हो । त्यो हामीभित्र छउन्जेल, हामी कतै अट्नेवाला या टिक्नेवाला छैनौँ । त्यही इगोले गर्दा नै लाखौँ सम्बन्धहरू कि त बिग्रिसकेका छन् कि तिनले दुरी बढाएका छन् ।

सलाइको काँटीको पो टाउको हुन्छ, तर बुद्धि हुन्न, त्यसैले त ठोक्काउनेबित्तिकै रिसले आगो बालिहाल्छ । तर

हामी मानिसको त टाउको पनि छ र बुद्धि पनि । अब त्यो भएको कुरालाई देखाऔँ न त ! 'इगो'को 'इ' हटाएर 'गो' गर्दिम्, अनि हेरौँ हाम्रो सम्बन्ध र जीवन कति सुन्दर हुन्छ !

के पनि बुझौँ भने कोही पनि पर्फेक्ट हुँदै हुँदैन । त्यसैले त पेन्सिलसँगै इरेजर पनि बनाइन्छ । यस कुरालाई बुझेर आत्मसाथ गर्न सक्यो भने मात्र सम्बन्धहरूबीच समझदारी बढ्छ । सम्बन्ध सुमधुर बन्छ । नत्र पराइ आफ्नो हुँदा बरु थाहा पाइन्छ, तर आफ्नै मान्छे पराइ हुँदा पत्तै पाइन्न । त्यसैले ज-जसले आफ्नो पार्टनरबाट धोका र निराशा पाइसक्नुभएको छ या छुट्टिएर एक्लै हुनुहुन्छ, उहाँहरू घडीको सुइ हेर्न छाड्दिनुस्, किनभने यहाँ मिनेटपिच्छे मानिसहरू बदलिन्छन् । अनि यो कुरा बुझ्नुस् कि जति जोडले हामी तल बजारिन्छौँ, त्यति नै जोडका साथ अत्यन्तै तीव्र गतिमा माथि उचाइ पनि छुनेछौँ । त्यसैले अरूको पछि लाग्न छोड्नुहोस्, अगाडि बढ्नुहोस् । भाग्यलाई दोष दिएर नबस्नुहोस् ।

यहाँ कुरा भाग्यको होइन, मेहनतको हो । अलिकति मेहनत गऱ्यो भने पानीलाई बरफ बनाएर डोकोमै अड्याउन पनि सकिन्छ नि त ! होइन र ? अनि केही राम्रो पाउन मेहनत त गर्नैपर्ने रहेछ । चाहे महिला-पुरुषको प्रकृतिबारे बुझ्न होस् या उनीहरूको भावनाको कदर गर्ने बारे सिक्न होस्, मेहनत त पक्कै गर्नुपर्छ । जसरी अजयले मेहनत नै नगरी आफ्ना आँखाले ड्वाङ्ङ देखेको कुरालाई मात्र साँचो मान्यो र आफ्नो नाबालक छोराले उसलाई माया गरेर 'आई लभ यु पापा' लेखेको कुरालाई बुझ्न सकेन । आवेगमा आएर

त्यस्तो घृणित कार्य गर्ने गल्ती गऱ्यो । त्यस्तै हुन्छ मेहनत नगरी निर्णय लिँदा हामी सबैको हालत । यसलाई अझै राम्रोसँग व्यावहारिक रूपमा बुझौँ ।

रामकी प्रेमिका विनिता एकदमै रिसाउने गर्थी । सानासाना कुरामा एकदमै कराउँथी र रामलाई मनपरी भन्थी । रामको ठाउँमा अरू कोही भएको भए त्यो सम्बन्ध टुटिसक्थ्यो । तर रामले त्यस्तो गर्दैन । बरु किन त्यस्तो भइरहेको छ भनेर ध्यान दिन्छ र विनिताको सबै कुरा एकदमै ध्यानपूर्वक सुन्न सुरु गर्छ । विनिताका सबै समस्याहरू बडो ध्यानपूर्वक सुनेर त्यसमा आफ्नो कुनै तर्क नराखी, केही बहस नगरी सहमति जनाउन थाल्छ । रामले तीन-चारपटक त्यसैगरी कुरा सुनिसकेपछि विनिताको रिस कम हुन्छ । अनि विनिताले रामलाई साँच्चैको आफ्नो सोच्न थाल्छे ऊसँग कहिल्यै रिसाउन्न । बरु रामलाई एकदमै माया, केयर गर्न र उसको कुरालाई एकदमै ध्यान दिएर सुन्न र महत्त्व दिन थाल्छे ।

यस कथामा विनिताले आफूलाई एक 'रक्षक' सम्झिरहेकी हुन्छे । आफ्नो हरेक कुरा मनाउन अरूसँग लड्ने गर्थी । तर खासमा उसलाई एक जना उसका कुराहरू मज्जाले सुनिदिने मानिस मात्र चाहिरहेको हुन्छ । जसले उसका कुराहरू सुनेर त्यसलाई मान्यता देओस् । यो काम रामले धैर्यता र मेहनतसाथ गर्छ । त्यसैले गर्दा उनीहरूको सम्बन्ध अझै मजबुत बन्छ । त्यसैगरी धेरै मानिसहरूलाई कोही विनिताजस्तो रिसाइरहने, कराइरहने मानिस देख्नासाथ लाग्न सक्छ कि उसलाई एउटा डाक्टरको आवश्यकता छ, तर वास्तवमा उनीहरूलाई मजाले

सुनिदिने एक जना मानिसको आवश्यकता परिरहेको हुन्छ ।

यो र यस्तै साना कुराहरू बुझ्न होस् या सम्झिन, सबै कुरामा मेहनत गर्नुपर्ने हुन्छ यदि हामीलाई राम्रो सम्बन्ध चाहिन्छ भने । मैले कसैलाई साँचो अर्थमा केयर गर्छु भने उसका गल्तीहरूले ऊप्रतिको मेरो फिलिङ्स् कहिल्यै चेन्ज हुन्न, किनभने हाम्रो मस्तिष्कले त्यो नकारात्मक ऊर्जा लिन्छ, तर मेरो हृदयले उसैको बारेमा सोच्छ, केयर गर्छ र उसैको नाममा धड्किन्छ ।

यदि मैले तपाईंलाई सोधेँ भने, "एउटा केटीले आफ्नो जीवनसाथीका रूपमा एउटा केटालाई छनौट गर्दा सबैभन्दा पहिला के कुरा हेर्छे होला ?" धेरै पुरुष साथीहरूको एउटै जवाफ हुने गर्छ । त्यो हो, पैसा । केटा कति धनी छ ? के काम गर्छ ? कति पैसा कमाउँछ या कत्तिको ह्याण्डसम छ ? ठीक भनेँ नि ?

अब तपाईंहरूलाई यो सुन्दा विश्वास नलाग्ला । भन्नुहोला, "यो सबै कुरा गलत हो । सबै केटीहरूले त्यस्तो हेर्दैनन् ।" तपाईंहरूले पनि देख्नुभएकै होला, कुनै एकदमै राम्री केटीले लुक्समा नराम्रो केटासँग जीवन बिताइरहेको । अनि हामीले सोचेको या अरूले भनेको सुनेका हौँला, "त्यो केटीले त्यस केटामा त्यस्तो के देखी होला ? कस्तो 'लङ्गुरको हातमा अङ्गुर'जस्तै छ ?" मैले त धेरैपटक देखेको छु त्यस्तो जोडी । त्यसैगरी मैले धेरै राम्रा केटीहरूलाई आर्थिक रूपले कमजोर रहेका केटाहरूसँग पनि देखेको छु ।

सत्य के हो भने पैसा, रूप, रङ आदि सबै कुरा त्यति

महत्त्वपूर्ण हुँदैन जति मानिसलाई लाग्ने गर्छ । महिलाहरूले सबैभन्दा महत्त्वपूर्ण दिने भन्ने कुरा विश्वास हो । पुरुषप्रति सबैभन्दा आकर्षित हुने कुरा नै त्यो पुरुष कत्तिको विश्वासिलो छ भन्ने हो ।

विश्वासिलो बन्नुको मतलब यो होइन कि उसले छल मात्र नगरोस् या उसलाई धोका नदेओस् । यहाँ विश्वासिलो बन्ने कुराको मतलब, हामीले जे बोलिरहेको छौँ या आफ्ना बारेमा जे भनिरहेका छौँ, के हामी त्यस्तै छौँ त ? या त्यस्तै गरिरहेका छौँ त ? अनि यी दुवै कुरा जुन पुरुषले एकदमै राम्रोसँग गर्छ, त्यही पुरुष नै महिलाहरूलाई सबैभन्दा विश्वासिलो र आकर्षित लाग्ने गर्छ ।

त्यसैले यस्ता कुराहरूप्रति चाहिँ ध्यान नै नदिने अनि धन, सम्पत्ति र पैसा भए मात्र ऊ खुसी हुन्छे भन्ने सम्झेर केही हुनेवाला छैन । मनस्थिति नबदलिएसम्म परिस्थिति सधैँ उही रहन्छ । यो हाम्रो आधा क्विन्टलको शरीरलाई पाँच-सात क्विन्टलका सपनाहरूले थिचेपछि जिन्दगी भारी भइहाल्छ नि ! बाटो खने मात्र गन्तव्यमा पुगिन्छ । यस्ता कुरा नबुझ्ने अनि खेदो खन्ने मात्रै गर्न थालेपछि त पक्कै अलपत्र परिन्छ नि ! अरूका बारेमा नराम्रो सोच्नु या भन्नुभन्दा पहिले आफू पनि त कस्तो छु भनेर एकपल्ट सोच्नुपर्छ नि । होइन र ?

त्यो फुच्चेले राम्रो र ठूलो गुच्चा आफूसँग राखेर त्यस फुच्चीबाट सबै चकलेटहरू पाउँदा पनि मनमा त्यस फुच्चीका बारेमा नराम्रो सोचेको थियो । आफू छट्पटिएर अशान्त भएर बसेको थियो । यसरी आफ्नो पार्टनरप्रति विश्वास नगरेर,

मनमा पाप राखेर आफ्नो जीवन अशान्त बनाउन पनि त भएन नि। होइन र ? कमलको फूल हिलोमा फुल्छ, अनि लालीगुराँस भीरमा। जहाँ फुले पनि ठाउँले फरक पार्दैन, फुल्ने नै हो भनेर अरूसँग आफ्नालाई तुलना गर्न छोडे त गुनासो पनि हुँदैन र जीवन अशान्त पनि हुँदैन नि, होइन र ?

तर धनभन्दा विद्या ठूलो भन्दैमा किताब लिएर सपिङ गर्न जानु पनि त भएन नि ! जीवन बिताउनैपर्छ एक जनासँग भन्दैमा आदर, सम्मान नगर्ने, यस्ता कुराहरू सिक्नै नखोज्ने, बेवास्ता गर्ने र आफ्नो भावनाको फिटिक्कै कदर पनि नगर्नेसँग सम्झौता गरेर आफ्नो अमूल्य जीवन बिगार्न र नर्क बनाउन पनि त भएन नि ! घरकी स्त्री समझदार भइन भने घर टुट्छ, तर पुरुष समझदार भएन भने त्यस घरकी स्त्री नै टुट्छे भनेर पनि त भुल्नुभएन नि, होइन र ? साथै बत्ती बालेर मात्र घर उज्यालो हुँदैन। एकपटक छोरी भएको घर र नभएको घर त हेरौँ। छोरीले पनि घरलाई कति धेरै उज्यालो बनाउँछे भनेर बुझ्दाबुझ्दै आजको आधुनिक युगसम्म आइपुग्दा पनि छोरी जन्माइस् भनेर मुख अँध्यारो पार्ने, ठुस्किने, त्यति खुसी नहुने र वचन लगाउनेजस्ता कार्यहरू लाजमर्दो, हास्यास्पद र निन्दनीय छ भनेर बुझ्न पनि त जरूरी छ नि होइन र ?

हाम्रो मोटरसाइकल बीच बाटोमा बिग्रियो भने के हामी त्यसलाई त्यतिकै छोडेर शोरूममा गएर अर्को नयाँ मोटरसाइकल किन्छौँ त ? त्यस्तो गर्दैनौँ नि हैन ? मोटरसाइकल मात्र होइन, हाम्रो मोबाइल, घडी आदि जेसुकै बिग्रे पनि हामी त्यसलाई बनाउन पठाउँछौ र फेरि त्यही प्रयोग गर्छौं नि

होइन ? अब सोचौँ त ! जाबो ती स-साना निर्जीव वस्तुहरूलाई त हामी त्यस्तो गर्छौं भने हामीजस्तै भावना भएको अर्को मानिस, जसको पनि हाम्रो जस्तै चित्त दुख्छ र आँखाबाट आँसु आउँछ, त्यसलाई चाहिँ बिग्रियो, सोचेअनुरूप भएन, राम्रो छैन आदि बहानामा हामीले कसरी छोडेर जान सक्छौं त ? ऊ चाहिँ बन्न सक्तैन र ? अवश्य पनि सक्छ नि । होइन र ? त्यसैले संयम बनौं । धैर्यता राखौं । केही कुरा राम्रो-नराम्रो हुँदैन । राम्रो र बलवान् त सिर्फ समय हुने गर्छ, अनि जो पनि एकैछिनमा कायापलट हुन सक्छ । हामी मानिसचाहिँ त्यत्तिकै घमण्ड गर्छौं, होइन र ?

जसले जित्छ, उसले हार्न पनि सक्छ । तर जसले अरूलाई जिताउँछ, उसले कहिल्यै हार्दैन । महिलाहरू हरपल आफ्ना श्रीमान्, आफ्नो परिवारलाई जिताउन तत्पर रहन्छन् । त्यसैले उनीहरू सदा विजेता कहलिन्छन् । यो सत्यलाई हामी पुरुषहरूले पनि आफूले गरेका कामहरू मात्र ठूलो नसम्झी बुझ्न सक्नुपर्‍यो नि । महिलाहरूले यस संसारको सबैभन्दा गाह्रो काम गर्छन् । त्यही काम हामीले केही समय मात्र गर्नुपर्‍यो भने हाम्रा शरीरमा भएभरका सबै प्वालहरूबाट हावा फुस्किन्छ । हो, घर सम्हाल्ने काम । अफिस जाने सबै काम, जसमा उनीहरूको आँखा खुलेबाट आँखा बन्द नभएसम्म कुनै न कुनै रूपमा लागिरहन्छन् । तैपनि न केही अपेक्षा राख्छन्, न केही गुनासो गर्छन् भनेर उनीहरूलाई महत्त्व दिन र सम्मान गर्न सिक्नुपर्‍यो नि । अनि मात्र त सुखी परिवार, खुसी परिवार भन्न मिल्छ भनेर बुझ्न सक्नुपर्‍यो नि, होइन र ?

कसैको खुसी नै हाम्रो खुसी बन्छ भने त्यही हो प्रेम भनेर हामीलाई थाहा छ नि, होइन र ? अनि हाम्रो र परिवारको खुसीका लागि आफ्ना सबै खुसी र सपनाहरूको बलिदान दिएर, तिलाञ्जली दिएर आफ्नो जीवन नै हाम्रो नाममा सुम्पेका महिलाहरूलाई विभिन्न बहानामा तिरस्कृत गर्ने कार्यहरू के जायज हो त ? एकपटक गहिरिएर सोचौँ त !

त्यो जोसुकै होस्, चाहे महिला होस् या पुरुष, कोहीले बाटो बिरायो भने, टुट्यो भने उसको साथ छोड्ने या उसलाई सम्हाल्न र सजाउन सिक्ने ? कोही रिसायो भने त्यसलाई मनाउन सिक्नुपर्छ । सम्बन्ध त मिल्छ भाग्यले, बस् त्यसलाई सुन्दरतापूर्वक मित्री मनले निभाउन सिकौँ ।

जीवन आफैँले बनाउने चित्र हो । धैर्यताका साथ मेहनत गरेर बनाए सुन्दर चित्र बन्छ । अल्छी गरे, धैर्य नराखे विचित्र बन्छ । 'सुखले मानिसलाई मख्ख बनाउँछ, तर दुःखले परिपक्व पक्कै बनाउँछ है' भन्ने कुरा मनन गर्दै कसैलाई पनि दुःखमा होच्याउने, अविश्वास गर्ने, अरूको कुरा सुनेर ऊमाथि शङ्का गर्ने र उसलाई एक्लो बनाउने कार्यहरू गर्नुको सट्टा बरु रातपछि दिन अवश्य आउनेछ भन्ने कुरा सम्झेर ऊमाथि विश्वास राखी साथ दिन सक्नुपर्छ । होइन र ?

कागतीलाई निचोर्दा कागतीको रस आउँछ भने सुन्तलालाई निचार्दा सुन्तलाकै । त्यसैले कुनै पनि कागतीलाई जबर्जस्ती थिचेर जति दबाब दिए पनि उसको प्राकृतिक स्वरूप बिग्रनेबाहेक अरू केही हुँदैन । त्यसको भित्रबाट सुन्तलाको जस्तो गुलियो रस कहिल्यै निक्लन्न । त्यसैले यो कुरा बुझेर कोहीसँग

रिसाउनु, उसलाई कम सोच्नु, उसलाई अरूसँग तुलना गरेर आफू पनि तनावमा बस्नु र उसलाई पनि तनाव दिनुभन्दा बरु सुन्तलाको रसभन्दा कागतीको रस झन् धेरै कुरामा प्रयोग गर्न मिल्छ, जुन झन् धेरै लाभदायक हुन्छ भन्ने कुरा बुझेर उसलाई कन्ट्रोल, म्यानुपुलेट नगरी परिवर्तन गर्नतिर नलागेर ऊ जस्तो छ त्यस्तै स्वीकार गरी खुसी हुन सिक्नुपर्छ । अरूलाई हेर्न छोड्नुपर्छ ।

सम्पन्न हुन राम्रो सम्बन्ध र सम्पत्तिको थुप्रो होइन, सन्तुष्ट मन हुनुपर्छ । त्यसैले फलानाको यस्तो-उस्तो भनेर दुःखी हुनुको सट्टा आफूसँग जे छ, त्यसैमा सन्तुष्टि मानेर सानासाना कुराहरूमा खुसी हुन सिक्नुपर्छ । होइन र ?

कसैले छोडेर जाँदैमा के चिन्ता लिनु ? असल मानिस भित्रिन खराब बाहिर निक्लिनैपर्छ भन्ने कुरा सम्झनुपर्छ । यहाँ कोही बिना कोही मर्दैन । बरु जुन दिन म आफूले आफैँलाई माया र विश्वास गर्न छोड्छु, त्यस दिनदेखि चाहिँ 'म पक्का मर्न थाल्छु' भन्ने यथार्थ बुझेर अघि बढ्नुपर्छ । किनभने जबसम्म मनस्थिति उस्तै रहन्छ, तबसम्म परिस्थिति पनि सदा उस्तै रहन्छ ।

यो समाजमा छोरी जन्मियो भने बलत्कृत हुन्छे कि भनेर डराउने गरिन्छ । छोरा जन्मियो भने अर्काकी छोरीचेलीलाई बलात्कार गर्छ कि भनेर कहिल्यै चिन्ता लिएको देखिन्न । त्यसैले केटीहरूले पनि ह्याण्डसम् र धनी केटाको चक्करमा सेक्सको सिकार भएर 'सबै केटाहरू उस्तै हुन्' भन्नुको सट्टा सफा मन भएको कोही सामान्य केटासँग माया गरेर हेर्नुपर्छ ।

ऊ अर्को मदन बनिदिन सक्छ । किनभने यहाँ दिनहुँ हजारौं मदनहरू आफ्ना मुनालाई राम्रो जीवन र धेरै खुसी दिन विदेशिन्छन् । होइन र ?

त्यसैले सुन्दरताको पछि कहिल्यै लाग्नुहुँदैन । आत्मीयताको पछि लाग्नुपर्छ । किनभने सुन्दरता खिएर जान्छ, तर आत्मीयता झन्झन् बढ्दै जान्छ । सासू-ससुराको मन दुख्ला कि ? श्रीमान् रिसाउनुहोला कि ? छोराछोरीलाई केही पुग्दैन कि ? समाजले के सोच्ला ? यस्तो सोच्दै आफ्नो चाहना सबै मारेर, सबैका बारेमा सोच्दासोच्दै एउटा नारीको जीवनलीला समाप्त भएको देख्छु म । सागर हौ नारी, तिमी प्यासी नबन । सृजना हौ नारी, तिमी दासी नबन । यो बुझौं कि स्वार्थको अर्को नाम आफन्त हो । यिनीहरूबाट जन्ती र मलामीबाहेक अरू कुराको आस राख्नु भनेको बालुवामा पानी हाल्नुबराबर हो । त्यसैले अरूको हेर्न, अरूको कुरा सुन्न र अरूबारे सोच्न छोड्नुपर्छ हामी सबैले । हुँदै नभएको कुराको चाहना राखेर आफू तनावमा बाँच्नुभन्दा आफूसँग जे छ, त्यसैलाई सम्हालेर खुसीसाथ बाँच्न सिकौं ।

कसैलाई हामी आफूजस्तो भएर बाँचेको मन परेन रे ! ठीकै त हो नि । झिँगालाई कहाँ फूल मन पर्छ त ? उसलाई त गु मन पर्छ । यो कुरा सम्झेर अघि बढ्नुपर्छ । फोटोग्राफरले फोटो खिच्दा भन्छन् नि, 'एकपटक हाँस्नुस् त !' अब सोचम् न, जाबो एकपल हाँस्दा फोटो त्यस्तो राम्रो आउँछ भने सबै परिस्थितिहरूमा आफूलाई संयम राख्दै जिन्दगीभर हाँसेर बाँच्न सके झन् कति सुन्दर होला हाम्रो जीवन !

लभ गर्दा र विवाहका सुरुका दिनहरूमा आफ्नी श्रीमतीको पसिनाले भिजेको शरीर पनि बास्ना आउने, अनि पछि त्यही श्रीमतीको लुगाबाट मसलाको दुर्गन्ध आउन थाल्ने कसरी हुन्छ ? फुटेको थर्मसजस्तै भएको छ आजकालका सम्बन्धहरू । अरूको अगाडि अरूलाई देखाउन एउटा र भित्री रूपमा अर्कै । त्यही थर्मसमा जस्तै भित्र टुक्रिएको सिसा, अनि बाहिर सुन्दर फ्रेम ! सबै कुरा फिर्ता पाउने आस नगर्नू । थाहा छ नि ? हामी जसको मलामी जान्छौँ, ऊ हाम्रो मलामी कहिल्यै आउँदैन । त्यसैले हरेक सम्बन्धलाई जतनसाथ सम्हाल्न सिकौँ । आफूले गर्ने कर्महरू गर्दै, निःस्वार्थ भावनाले प्रेम र कर्म गर्दै, त्यसलाई फलाउन फुलाउन सिकौँ ।

***

मानौँ तपाईं बाटोमा हिँड्दै हुनुहुन्छ । एक्कासि दुईवटा मूर्ति भेट्टाउनुभयो । एउटा रामको अनि अर्को रावणको । अब मैले तपाईंलाई एउटा मूर्ति मात्र उठाउन पाइन्छ भनेर भनेँ । त्यो बेला तपाईंले पक्कै पनि रामको मूर्ति नै उठाउनुहुन्छ, होइन त ? किनभने राम भगवान् हुन् । मर्यादा पुरुष हुन् । यस्ता अनेकौँ आदर्शहरू तपाईंको दिमागमा आउँछ, अनि तपाईंले रामको मूर्ति नै उठाउनुहुन्छ ।

अब फेरि मानौँ, भोलि बिहान पनि तपाईं त्यही बाटो हिँड्नुभयो । फेरि दुईवटा मूर्ति नै भेट्नुभयो । परिस्थिति पनि समान छ, एउटा मूर्ति मात्र उठाउन पाइन्छ । मूर्ति पनि एउटा रामकै र अर्को रावणकै छ । तर यसपालि रामको मूर्ति ढुङ्गाको अनि रावणको मूर्ति सुनको छ । अबचाहिँ तपाईं

कुन मूर्ति उठाउनुहुन्छ ? पक्कै पनि रावणको मूर्ति उठाउनुहुन्छ, होइन र ? उठाउनु पनि पर्छ ।

त्यसैले हरेक परिस्थिति अनुसार हामी मानिसको मनस्थिति बदलिन्छ र बदलिनु पनि पर्छ । हामी जिन्दगीभर सधैं एकैखाले मान्यता र आदर्शहरू बोकेर सधैं अघि बढिरहन पनि सक्दैनौं र त्यस्तो गर्नु पनि हुँदैन । चाहे त्यो सम्बन्ध होस् या अरू केही, 'म सधैंभरि एउटै मान्यतालाई काखी च्यापेर अघि बढ्छु' भनेर सोच्यो भने जीवन कठिन बन्दै जान्छ । चेसको खेलजस्तै हो जिन्दगी, 'सधैं अघिमात्र बढ्छु' भनेर सोच्यौं भने चाँडै सकिनेछौं । धैर्यताका साथ जुन प्यादाले अटल भएर चाल चाल्छ, त्यही पछि माथि पुगेर सबैभन्दा शक्तिशाली रानी बन्छ । जसले कहिले चाल अघि त कहिले पछि सार्दै अघि बढ्छ, त्यही खेलाडी विजेता बन्छ । जसरी रबर पछाडि तन्केपछि मात्र द्रुत गतिमा अगाडि जान सक्छ, त्यस्तै हो जिन्दगी, 'जो टिक्यो उही बिक्यो ।'

एक जना मानिसले घोडा किन्यो । अनावश्यक खर्च गऱ्यो भनेर समाजका सबैले आलोचना गरे ।

त्यो मानिसले टाँगा चलाएर पैसा कमाउन थाल्यो । तिनै समाजका मानिसले उसको प्रशंसा गरे ।

एक दिन घोडाले लात्ती हानेर उसलाई घाइते बनायो । फेरि समाजका ती मानिसहरूले घोडा किन्नु नै उल्टु काम थियो भनेर आलोचना गर्न थाले ।

एक दिन घोडादौडमा उसको घोडा प्रथम भयो र पैसा आयो । फेरि तिनै मानिसहरूले उसको बुद्धिको खुलेर प्रशंसा गरे ।

एक दिन घोडा जङ्गलमा हरायो । तब तिनै मानिसहरूले उसलाई फेरि नानाथरी भनेर आलोचना गरे ।

अर्को दिन घोडाले जङ्गलबाट एउटा घोडी लिएर आफैं फर्कियो । अब फेरि त्यही समाजका तिनै मानिसहरूले उसको जमेर प्रशंसा गर्न थाले ।

ल हेरम् त, जे गरे पनि राम्रो-नराम्रो भनिहाल्ने ? अनि केही समय नपर्खी एकदमै चाँडै हाम्रा बारेमा धारणा बनाइहाल्ने यो समाजलाई खुसी पार्न आफू दुःखी भएर बाँच्ने त ?

बिहेमा जन्तीहरू दुलाहाका अगाडि, तर मान्छे मर्दा मलामीहरू लासको पछाडि लागेको त हामी सबैले देखेकै छौं । यस्तै छ संसारको चलन । सुखमा अगाडि र दुःखमा पछाडि हुन्छन् । अब यो कुरा बुझेपछि पनि दुनियाँले के भन्लान् भनेर सोच्ने त ? अझै दुनियाँको कुरा सुनेर या देखेर आफ्नो पार्टनरलाई जज गर्ने, अरूसँग तुलना गर्ने र गुनासो गर्ने कार्य गर्ने त ? माहुरीहरूले झिँगाहरूसँग गएर, 'मह गुभन्दा राम्रो हो' भन्दै कुस्ती खेलेको कहिल्यै देखेका छौं र हामीले ? अनि आफ्नो सोच, मान्यता र अस्तित्व प्रमाणित गर्न हामीचाहिँ किन त्यस्तो गल्ती गर्ने ? होइन र ?

हाम्रो जीवनमा भेटिने मानिसहरू बादलजस्तै हुन् । कोही आएर शीतलता छर्छन् त कोही गएर उज्यालो पार्छन् । अनि याद राखौं, प्रत्येक दिन एउटा अपेक्षाका साथ सुरु हुन्छ र अनुभवको साथमा सिद्धिन्छ । यही हो जिन्दगी । होइन त ?

****

समय लागिहाल्छ नि !
पानीलाई बरफ बन्न केही समय लाग्छ
अस्ताएको सूर्य उदाउन केही समय लाग्छ
फेरि मानिसमा के नै फरक छ र
अलिकति धैर्यता राख
आफ्नो प्रयास जारी राख
खिया लागेको भाग्यको ढोका खुल्न
केही समय लागिहाल्छ नि !
केही बेर रोकिएपछि फेरि हिँड्न थाल्न
हरेक ठक्करपछि सम्हालिन
केही समय लागिहाल्छ नि !
चम्किने छौ तिमी फेरि चाँडै
आफ्नो अस्तित्व महसुस गर्न
टुक्रिएको मनलाई सिँगार्न
केही समय लागिहाल्छ नि !
तिमीले जे भन्यौ पूरा गर्ने छौ
आफूमाथि भरोसा राख
बादल गर्जिएपछि पनि, पानी पर्न त
केही समय लागिहाल्छ नि !
समय नआई केही कुरा पूरा हुन्न
धैर्यता राख, सबै कुराका लागि
समय लागिहाल्छ नि, समय लागिहाल्छ नि !

जब गुमाउनका लागि केही पनि हुन्न नि.. तब गर्नका लागि धेरै कुरा हुन्छ ।

**- आशिष जङ्ग**